● वर्ष १० ● अङ्क १ ● भाद्र २०६५ ● पूर्णाङ्क १०९



● **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
फोन: ०५६-५२१३८५
● **गोरखा**, सौरपानी–४,
फोन: ०६४-४२९३१८
● **कास्की**, पो.उ.म.न.पा.-
१०, रामघाट,
फोन: ०६१-५३०७८६
● **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
फोन: ०४६-५४०३३१
● **पाल्पा**, तानसेन,
फोन: ९८४७०-२८१८८
● **ललितपुर**, लगनखेल,
फोन:२२२००२१
● **गोरखा**, बसपार्क,
फोन: ०६४-४२०३४८
● **तनहुँ**, दमौली, व्यास गुफा,
फोन: ०६५-५६१६६२
● **लमजुङ**, बेँसीशहर-९, शेराबजार
● **भक्तपुर**, सूर्यविनायक,
फोन: ०१-६२१३४५५
● **काभ्रे**, बनेपा, नाला जाने बाटो
फोन: ०१-६२२५१७२
● **कास्की**, लेखनाथ चोक,
फोन: ०६१-५६०१६९
● **सिन्धुली**, रातमाटा
● **स्याङ्जा**, प्रगतिनगर घुम्ती
फोन: ९८४६०-४४३५४
● **चितवन**, गौरीगञ्ज
● **सिन्धुपाल्चोक**, बाह्रबिसे
फोन: ०१-६९१६५९३
● **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**


## ऋषि विशेष


मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र सोमबार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक वृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विशेष साधना : विभिन्न जिल्लाहरूमा विशेष साधना कार्यक्रम ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।


**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**

सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**

**भेराइटी प्रिन्टर्स प्रा.लि.**

कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**

**बसुन्धरा, कल्की मन्दिर, काठमाडौँ, नेपाल**

**फोन नं: २०७१२००, २१००१५३, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा........

*सिद्धाश्रम शक्ति केन्द्र विभिन्न आध्यात्मिक गतिविधिहरुको संचालनद्वारा आध्यात्मिक समाज निर्माणको लागि लागिपरेको छ। आध्यात्मिकता आजको अत्यावश्यकता बनेको छ।*

*आज हामी देख्दछौं हाम्रो राष्ट्र नेपालमा शान्ति र स्थायित्वका लागि धेरै प्रयत्नहरु भइरहेका छन्। प्रत्येक प्रयत्न सुमधुर आशाका रुपमा देखा पर्दछन् र निराशाको रुपमा हराउँदछन्। यो सबैको मूल कारण नै नेताहरुमा त्यागको भावनाको कमी हुनु हो। आध्यात्मिकताले मात्र व्यक्तिलाई त्यागी बनाउन सक्दछ। तसर्थ, आज नेताहरुका लागि, जनजनको लागि आध्यात्मिकता अपरिहार्य बनेको छ।*

*धन्य छन् हाम्रा पूर्वज ऋषिमुनिहरु जसले मानव समुदायलाई सदैव आध्यात्मिक बन्ने प्रेरणा दिएका छन्। प्रेरणा मात्रै होइन, उनीहरुले आध्यात्मिक क्षेत्रमा कसरी अघि बढ्ने, मानव समुदायलाई कसरी सुखमय बनाउने भन्ने सन्दर्भमा यति धेरै उपाय र मार्गहरु प्रशस्त गरिदिएका छन् जसको कुनै लेखाजोखा नै हुन सक्दैन। तर दुःखदायी कुरा यो रह्यो कि मानव समुदायले ती कुराको अवलम्बन गर्न त कता हो कता, ती मार्गहरुलाई हेय र उपहासको दृष्टिले हेर्न थाल्यो जसको फलस्वरुप आज सर्वत्र दुःख र सन्ताप फैलिएको छ।*

*ऋषिसत्ता वास्तवमा देवसत्ताभन्दा पनि माथिल्लो सत्ता हो। ऋषिमुनिहरुको कृपा पाएर नै देवीदेवता शक्ति सम्पन्न बनिरहेका हुन्छन्। सदैव लोकहित चिन्तनमा नै निमग्न रहने र यसको लागि नै सदैव आँखा बन्द गरेर आन्तरिक अनुसन्धानमा रत रहने ऋषिहरुको स्वभाव रह्यो जसलाई हामी तपस्या भन्दछौं। यही अनुसन्धान अर्थात् तपस्याका प्राप्तिका रुपमा ऋषिमुनिहरुले मंत्र, तंत्र, ध्यान, योग, ज्योतिष, आयुर्वेदजस्ता अनेकौं धरोहरहरु दिएका छन् जसको अवलम्बनद्वारा जीवनमा आइपर्ने प्रत्येक समस्याको समाधान गर्दै मानिस आध्यात्मिकरुपमा अघि बढ्न सक्दछ।*

*मानव कल्याणमा सदैव समर्पित दूरगामी दृष्टि भएका ऋषिमुनिहरुको उच्चतम सम्मान गर्नु वास्तवमा हामी सबैको कर्तव्य हो। यही कर्तव्यपरायणताको सानो प्रयासस्वरुप यस अंकलाई 'ऋषि विशेष'को रुपमा प्रकाशित गरिएको छ।*

*यस अंकसँगै 'गोरक्ष निखिल वाणी' प्रकाशनले दशौं वर्षमा प्रवेश गरेको छ भने हालै यो पत्रिका नेपाल प्रेस काउन्सिलको पत्रिका वर्गीकरणमा 'क' श्रेणीमा पर्न सफल भएको छ। एउटा आध्यात्मिक पत्रिकाले यति लामो समयसम्म निरन्तरता पाउनु र अझै प्रगतिपथमा अग्रसर हुँदै 'क' वर्गको स्तरीय पत्रिकामा पर्नु निश्चय नै सबैको लागि गौरवको विषय बनेको छ। यो सबै पाठक महानुभावहरुको स्नेह र हौसलाको परिणति हो। आत्मीय पाठकवर्गको स्नेह र सदायताको भविष्यमा पनि आकांक्षी बन्दै पत्रिकालाई अझ स्तरीय बनाउन हामी कृतसंकलिप्त बन्दछौं।*

*अन्तमा, अन्य अंकहरुमा जस्तै यस अंकको प्रकाशनमा भएका गल्ती, न्यूनताहरुको लागि यहाँहरुसँग क्षमायाचना गर्दै यहाँका अमूल्य सुझावहरुको सदा झैं आकांक्षा राख्दछौं।*

*अस्तु।*

चेतोनाथ शर्मा आचार्य

# ऋषि शब्द र चरित्र वर्णन

वैदिक साहित्यदेखि पौराणिक साहित्यसम्म ऋषि र मुनि शब्दको प्रयोग व्यापकरूपमा भएको पाइन्छ। त्यसरी प्रयोग भएका ऋषि मुनि शब्दको व्याकरणसम्मत ठोस अर्थ के हो ? भनेर जिज्ञासा लाग्नु स्वाभाविक हो। त्यसो हुँदा यहाँ ती शब्दको शास्त्रसम्मत अर्थबारे चर्चा गरिन्छ। शब्दगत अर्थ मात्र भन्दा ऋषि शब्द मन्त्रद्रष्टा अर्थमा प्रसिद्ध छ भने मुनि शब्द मनन गर्ने अर्थमा।

व्युत्पत्ति एवं धातुगत अर्थमा यसको स्वरूप बुझ्न खोज्दा तुक्षदिगण पठित गमन अर्थ भएको ऋष् धातुदेखि उणादि कि प्रत्यय भएर ऋषि शब्द बन्छ। जसको सामान्य अर्थ हो गमनशील।

संस्कृत वाङ्मयमा दुई धारा प्रसिद्ध छन्। तिनमा पहिलो धारालाई ऋषिधारा भनिन्छ र दोस्रोलाई मुनिधारा। यस्तो नाम हुनुमा कारण के छ भने शास्त्रको विस्तार यिनैलाई आधार मानेर भएको छ। पौराणिक कथनअनुसार आदि पुरुष विष्णुको नाभिकमलमा पैदा भएका ब्रह्माले सृष्टि विस्तार गर्ने क्रममा मानसरूपले चतु:सनं याने सनक सनन्दन सनातन सनत् यी चार पुत्र पैदा गरे। पैदा भएका सनकादिलाई सृष्टि विस्तारमा सहयोग गर्न अह्राउँदा सनकादिले आफूहरू सृष्टि विस्तारको झमेलामा नलाग्ने विचार व्यक्त गरे। अगाडि गएर ब्रह्माले फेरि सात पुत्र पैदा गरे जो ऋषिरूपमा प्रसिद्ध भए।

सृष्टि गर्न अघि सरेका ब्रह्माको मुखबाट चार वेद र पुराणहरू पनि पैदा भए। पैदा भएका ती शास्त्रहरूको अध्ययन-अध्यापन, प्रचारप्रसार आवश्यक देखिएकोले सप्तर्षिहरूलाई वेदको जिम्मा दिइयो। अर्का मानसपुत्रलाई पुराण जिम्मा लगाइयो। यसरी आ-आफ्नो जिम्मामा आएको शास्त्रको संरक्षणको भार ऋषि र मुनिमा आयो भन्ने कथन मार्कण्डेय पुराणमा भेटिन्छ।

**उत्पन्न मात्रस्य पुरा ब्रह्मणोऽव्यक्त जन्मन:।**
**पुराणमेतइ वेदाश्चमुखेभ्योऽनुविनि:सृता: ॥**
**वेदान् सप्तर्षय स्तस्माज्जगृहुस्तस्यमासा:।**
**पुराणंजगृह्वश्चाद्या मुनयस्तस्य मानसा:**

ऋषि शब्दको अरु व्युत्पत्ति एवं व्याख्या के पाइन्छ भने 'ऋषति प्राप्नोति सर्वान् मन्त्रार्थान् अथवा ऋषति ज्ञानेन संसार पारं पश्यतिऋषि:'। याने जो आफ्नो बौद्धिक क्षमताले सम्पूर्ण वेदको अर्थ जान्दछन् र संसारभन्दा परको यथार्थता पनि बुझ्दछन् ती हुन् ऋषि।

वायु पुराणमा ऋषि शब्दको चार अर्थ मानिएको छ। जस्तो कि गति (ज्ञान), श्रवण, सत्य र तपस्या। ब्रह्माले जस्मा यी चार कुरा निर्धारण गरेका छन् तिनै ऋषि कहलाइन्छन्।

निरुक्तको व्याख्या गर्ने यास्काचार्यले 'तत्त्वसाक्षात्कारकर्ता व्यक्ति विशेष: ऋषि:' भनेका छन्। यस कथनअनुसार तत्त्वसाक्षात्कार गर्ने व्यक्ति विशेष ऋषि हो भन्ने बुझिन्छ। सृष्टिको आरम्भमा तपस्यारत ब्रह्मा र उनका मानस पुत्रसमक्ष वेद स्वयं

प्रादुर्भाव भयो । वेद स्वयं नै रहस्मय रचना हो जसको ज्ञान सामान्य व्यक्तिको सम्झनामा आउन सक्ने देखिँदैन । भागवत्को पहिलो श्लोकमा पनि भनिएको छ– 'मुह्यन्ति यत् सूरय:' अर्थात् वेदको यथार्थ अर्थ पत्ता लाउन विद्वान्हरू पनि सक्तैनन् र मुग्ध बन्छन् । जो ज्यादै रहस्यात्मक कुरा छ त्यो साधारणले बुझ्ने, थाहा पाउने नभएर गुप्तरूपको हुनु स्वाभाविक छ । यस्तै गुप्त ज्ञान गर्ने क्षमता जसमा छ उसैलाई ऋषि भनिन्छ । गीतामा पनि 'ऋषिझि र्बहुधा गीतं छन्दोभिर्विविधै: पृथक्' भनेर ऋषिहरूले विविध छन्दमा बहुरूपले व्याख्या गरेका छन् भनेर उनीहरूप्रति आदरभाव व्यक्त गरिएको छ ।

वायु पुराणमा 'तप: पूतोऽन्तर्ज्योति: सम्पन्नो मन्त्रद्रष्टातत्त्वदर्शी ऋषि:' भनेर तपस्याले पवित्र बनेको अन्तस्करणमा ज्योति फैलिएको मन्त्रद्रष्टा तत्त्वदर्शी व्यक्ति नै ऋषि हो भनिएको छ । एता वता बौद्धिक चिन्तनको उच्चता प्राप्त साधक व्यक्ति नै ऋषि भएको सिद्ध हुन्छ । वेदका मन्त्रहरूमा त्यससित सम्बन्ध राख्ने देवता र मन्त्र साक्षात्कार गर्ने ऋषिको नाम पनि उल्लेख भएको हुन्छ । यसबाट सभ्यताको शुरुआत ज्ञानको आलोक ऋषिमुनिबाटै सर्वप्रथम प्रकाशमा आएको देखिन्छ ।

अब अलिकति ऋषिको भेदबारे पनि उल्लेख गरौँ । ब्रह्मर्षि, देवर्षि, महर्षि परमर्षि, काण्डर्षि, श्रुतर्षि र राजर्षिजस्ता ऋषिका भेद प्रसिद्ध छन् । यिनमा भृगु मरीचि अत्रि अङ्गिरा पुलस्त्य: पुलह: ऋतु: मनु दक्ष वशिष्ठ यी दश ब्रह्माका मानस पुत्र हुन् । यिनीहरू ऋषित्व र महत्त्व दुवै धर्मले युक्त भएका हुनाले महर्षि भनिन्छन् । गीतामा श्रीकृष्णले आफ्नो विभूति उल्लेख गर्ने क्रममा 'महर्षिणी भृगुरहम्' भनेका छन् । ऐश्वर्यशाली यी महर्षिका छोरा शुक्र बृहस्पति कश्यप च्यवन जो आदि छन् ती ऋषि भनिन्छन् । उत्तम कुलमा पैदा भएका यिनले आफ्नो तपोबलद्वारा ऋषित्व प्राप्त गरेका हुन् । यी ऋषिका पुत्रलाई ऋषीक भनिन्छ । जसअन्तर्गत भरद्वाज, दीर्घतम, शरद्वत्, पराशर, शृङ्गी आदि पर्दछन् । ब्रह्माका मानस पुत्र महर्षि नै साधनासिद्ध भई ब्रह्मर्षि भनिन्छन् । देवर्षिको संख्या के कति हो भनेर तोकेको त उति पाइँदैन तर पनि वायु पुराणमा उल्लेख भए अनुसार धर्मका पुत्र नरनाराण, ऋतुपुत्र बालखिल्य, पुलह पुत्र कर्दम, पर्वत, नारद देवर्षि भनिन्छन् । गीताको विभूति योगमा देवर्षिमा 'म नारद हुँ' भनिएको छ ।

जो राजा प्रजाजनको संरक्षण, संवर्धन दत्तचित्त भई तिनलाई अनुरञ्जन गर्दछन्, सत्यवादी धार्मिक अनि परमार्थ चिन्तक छन्, ती राजर्षि भनिन्छन् । यिनको स्थान ब्रह्मर्षि र देवर्षिभन्दा तल्लो मानिन्छ । वैदिक वाङ्मय जो छ त्यो अहिलेसम्म संसारमा प्राप्त वाङ्मयमा प्राचीनतम वाङ्मय हो । जसको प्रादुर्भावबारे समय तोक्न सकिएको छैन । त्यति प्राचीन वाङ्मय कतिपय अङ्ग-भङ्ग र शाखा-प्रशाखा लोप भए पनि अविकृतरूपमा अहिलेको पिँढीसम्म आइपुगेको छ त्यो ऋषिहरूकै योदानबाट आइपुगेको हो । शुरुमा त वेद पुस्तकाकाररूपमा नभएर वर्णमय मन्त्रमयरूपमा विद्यमान थियो । त्यस्तो वेदलाई उनीहरूले दिव्यश्रोतेन्द्रियद्वारा सुनेर उत्तर पिँढीलाई यथावत् सुनाएर उपस्थित गर्न लगाए । त्यस्तो हुँदा वेदको अर्को नाम श्रुति भन्ने रह्यो । त्यसै भएर 'शिवादि ऋषिपर्यन्तास्मर्तारोऽस्यनकारका:' भनिएको छ । भन्नुको अर्थ जतिले सुने पढे त्यही मात्र उनले गरेका हुन्, बनाउने काम गरेका होइनन् । कारण वेद कसैले बनाएको होइन ।

ऋषि शब्दको अर्थ र तिनको काम बारेको छोटो उल्लेख पछि तिनैसित नाता जोडिएको मुनिबारे पनि केही उल्लेख गरिहालौँ । संस्कृतको मनु अवबोधने धातुबाट उणादि इ प्रत्यय भएर मुनि शब्द बन्छ र अर्थ हुन्छ– जान्ने । सामान्य जान्ने मात्र नभई वेदशास्त्रको तत्त्ववेत्ता । शङ्खस्मृतिमा हिँड्दा जुन बेला सन्ध्याकाल हुन्छ त्यहीँ रहने । महाभारत वन पर्वमा तीव्र तपस्यामा निरत क्षमाशील व्यक्तिलाई मुनि भनिएको छ । पौराणिक साहित्यमा ऋषि शब्दजस्तै मुनि शब्द पनि धेरै ठाउँमा प्रयोग भएको छ । कोशकार अमरसिंहले मुनि शब्दको 'पर्यायऽवाचं यम:' भनेका छन् जसको अर्थ हुन्छ थोरै वा परिमित बोल्ने ।

भगवद्गीतामा मुनि शब्दको स्वभाव र अर्थबारे भनिएको छ–

दु:खेष्वनुद्विग्नमना:सुखेषु विगतस्पृह: ।
वीतरागभयक्रोध:स्थितर्धीमुनिरुच्यते ॥

अर्थात् दु:ख पर्दा उद्विग्न खिन्न नहुने सुख विषयक कुरामा इच्छा नभएको रागद्वेष भय र क्रोधरहित स्थिर बुद्धि भएको व्यक्तिलाई मुनि भनिन्छ । सर्प र नाग अलग भनेर माने पनि ती दुईलाई छुट्याउने लक्ष्मण रेखा नभए झैँ ऋषि र मुनिलाई छुट्याउने भेदक रेखा देखिँदैन । त्यसैले विष्णु पुराणमा भृगुभव मरीचि अङ्गिरा पुलस्त्य पुलह क्रतु अनि वसिष्ठलाई ऋषिमुनि दुवै शब्दले व्यवहार गरिएको छ । यसैगरी विश्वामित्र कण्वनारद आदिलाई पनि महर्षि महामुनिजस्ता शब्दले व्यवहार गरेको पाइन्छ । ऋग्वेदमा मुनिहरूको जुन शक्ति र आचरणबारे जे उल्लेख छ त्यसअनुसार उनीहरू परिव्राजक योगी थिए भन्ने बुझिन्छ । संक्षेपमा संयत जीवन जिउने शास्त्रज्ञ तत्त्वदर्शी व्यक्ति नै ऋषि मुनि हुन् भन्ने बुझ्नुपर्छ । वैदिक धर्म संस्कृतिमा मात्र नभएर जैन र बौद्ध साहित्यमा पनि मुनि शब्दको प्रयोग प्रशस्तै भेटिन्छ । बुद्ध स्वयंको नाम मुनि भन्ने छ, मुनि:शाक्यमुनि: यस रूपमा । एतावता त्यहाँ पनि शास्त्रज्ञ साधक व्यक्तिलाई नै ऋषि मानेको देखिन्छ ।

## नारी उत्थानमा ऋषिहरूको देन

हाम्रा महान् ऋषिहरूले पुरुष जातिका साथसाथै स्त्री जातिको कल्याणका लागि पनि ध्यान दिनुभएको छ । स्त्री जातिमाथि आइपर्ने आपत्तिलाई हटाउनका लागि उहाँहरूले स्वयं मान-अपमानसम्मलाई पनि वास्ता गर्नुभएन । मतङ्गी ऋषिले शबरी भिलनलाई सहारा दिएर उनको भक्ति जगत्को पवित्र इतिहासमा उच्च स्थान दिलाउनु भएको थियो । देवर्षि नारदले हिरण्यकशिपुकी पत्नी कयाधूलाई आश्रममा राखी उपदेश दिएर महान् भक्त प्रह्लादलाई प्राकट्य गराउनु भयो । अग्नि परीक्षापश्चात् मानिसहरूले जुन सीतामाथि औँला उठाउन छोडेन, धोबीद्वारा जसमाथि कलङ्क लगाइयो यस्ती माता सीतालाई जब लोकापवादको कारण वनवास जानुपऱ्यो, तब उहाँलाई सहारा दिन वाल्मीकि ऋषि अघि बढ्नुभयो । यति मात्र होइन उहाँले लव-कुशलाई पनि महान् विद्याहरू सिकाएर तेजस्वी बनाउनुभयो । यस्ता महान् ऋषिहरुप्रति हामी वंदना गर्दछौँ ।

डा. जगदीशचन्द्र रेग्मी

# ऋषि स्मरण

**हा**मी हिन्दुहरूको आध्यात्मिक र सांस्कृतिक परम्परामा 'मन्त्रद्रष्टा' ऋषिहरूको व्यापक प्रभाव रहेको कुरा हामी सबैलाई थाहा भएको कुरा हो । वेद, वेदांग, दर्शन, पुराण र तन्त्र आदि समस्त स्रोत साहित्यको निर्माण र आचार विचारको मानक स्थापना गर्ने काममा ऋषिहरूको योगदान रहेको पाइन्छ । अर्को शब्दमा भन्ने हो भने हिन्दु संस्कृति र सभ्यताको व्यवस्थापनमा ऋषिहरूको योगदान अविस्मरणीय रहेको अनुभव गरिएको छ । यस्तै योगदानका कारण हिन्दुहरूका विभिन्न धार्मिक कृत्यहरूमा ऋषिहरूको सम्मान गर्ने र कतिपयमा उनीहरूलाई नै प्रमुखता दिने परम्परा रहेको पाइन्छ ।

ऋषिको परिभाषाबारे विचार गर्दा अमरकोशले दिएको परिभाषाको चर्चा गर्न सकिन्छ । सो कोशको ब्रह्मवर्षमा ऋषिको परिभाषा दिँदै भनिएको छः- ऋषय सत्यवचसः ।[१]

उक्त परिभाषा सामान्य ऋषिको हो भन्ने कुलचन्द्र गौतमको कथन रहेको छ ।[२] तर उहाँले नै एक संस्कृत श्लोक[३] उद्धृत गरेर त्यसको अनुवाद ऋषिको अर्को परिभाषाको रूपमा प्रस्तुत गर्नुभएको छः-

'तपास्याले शुद्ध भएका, जस्ताको तस्तै बोल्ने र सांगोपांग वेदको तत्त्व जान्नेलाई ऋषि भन्दछन् ।'[४]

साधारणतया ऋषिको परिभाषा यस्तो पाइए पनि हिन्दुहरूका विशाल स्रोत साहित्यमा ऋषिहरूलाई व्यापक विश्वासहरूसँग सम्बन्धित गरेर देखाइएको पाइन्छ जसमा उनीहरू देवता सरह वा कहिले कहिले देवताहरूलाई पनि काबू गर्ने एक दिव्य शक्तिका रूपमा वर्णित पाइनु विचारणीय छ ।

ऋषिहरूको स्मरण गर्दा हामीलाई हाम्रो हिन्दु समाजमा प्रचलित दुई महत्त्वपूर्ण धार्मिक कृत्यहरूको सम्झना हुन्छ जुनको नामाकरण ऋषिबाट हुन्छ । ती दुई कृत्य हुन्– ऋषितर्पणी र ऋषिपञ्चमी । यी दुई कृत्यको संक्षिप्त परिचय तल दिइन्छ ।

श्रावण शुक्ल पूर्णिमाको दिन ऋषितर्पणी पर्व पर्दछ जसलाई हामी जनै पूर्णिमाको नामले चिन्दछौँ । यो पर्वमा मन्त्रिएको जनै फेरिने हुनाले जनैपूर्णिमा नामकरण भए पनि यस पर्वको परिचयमा 'उपाकर्म' र 'उत्सर्ग' शब्द पनि जोडिएका पाइन्छन् । वेदको अध्ययन छोड्नु (उत्सर्जन) र वेदको अध्ययन आरम्भ गर्नु (उपाकर्म) गर्ने दिन हुनाले यस पर्वको नामकरणको नाम 'उपाकर्म' पनि रहन गएको पाइन्छ । उपाकर्मलाई विद्यासंस्कार पनि भनिन्छ किनभने यस दिन माथि भनिए झैं वेदादि शास्त्रको अध्ययन कार्यको व्यवस्थापन र वेदादि शास्त्रसँग घनिष्ठरूपले सम्बन्धित ऋषिहरूको पूजाआजा गरेर आशीर्वाद लिइन्छ ।

वेदपाठ गर्न पाउने सबैको 'ऋषितर्पणी' (वा जनैपूर्णिमा) कृत्य श्रावणी पूर्णिमाको दिन नहुन सक्दछ किनभने वेदको शाखा भेदले सो कृत्यको समय फरक हुने परम्परा पाइन्छ । शुक्ल यजुर्वेदको माध्यन्दिनीय शाखाध्यायीहरूको लागि श्रावणी पूर्णिमा तोकेअनुसार हामी कहाँ यो तिथिको प्रधानता हुन आएको हो ।

श्रावणी कृत्यमा कुशको ऋषि बनाएर तिनको पूजा र तर्पण गरिन्छ ।[५] पूजा गरिने सप्तर्षिका नाम निम्न छन्ः-

**गौतमश्च भरद्वाजो विश्वाऽमित्रोऽथ काश्यपः ।**

**जमदग्निर्वसिष्ठोऽत्रि रुसप्त वैवस्वतेऽन्तरे ।**

यस श्लोकअनुसार सप्तर्षिहरूमा गौतम, भरद्वाज, विश्वामित्र, काश्यप, जमदग्नि, वसिष्ठ र अत्रि पर्दछन् ।

यिनै सप्त ऋषिको मान्यतामा आधारित भएर भाद्रशुक्ल पञ्चमीको दिन महिलाहरूले ऋषिपञ्चमी व्रत र त्यसअन्तर्गत सप्तर्षिहरूको पूजा गर्ने चलन चलेको छ । यस व्रत गर्नाको उद्देश्य महिलाहरूले रजस्वला अवस्थामा जानाजान अथवा अन्जानमा छूतछात गरेको दोष हटाउने हो ।[६]

ऋषिको पूजन तर्पणादि समन्वित उपरोक्त दुई प्रमुख कृत्यमा 'गोत्र'को विश्वासले पनि काम गरेको मान्न सकिन्छ ।

बौधायन स्मृतिअनुसार 'गोत्र' बेगिन्ती छन् तर अगस्त्य आठौं समेत जमदग्नि, भरद्वाज, विश्वामित्र, गौतम, अत्रि, वसिष्ठ र कश्यप सात ऋषिबाट निर्मित गोत्र जम्मा ८ छन् र तिनको नामबाट निर्मित ४९ गणका प्रवर मानिएका छन् । सम्पूर्ण हिन्दु समाज उपरोक्त गोत्र र प्रवरसँग सम्बन्धित हुनाले गोत्र प्रवर प्रवर्तक ऋषिहरूको मान मानिता गर्ने परम्परामा ' पुर्खापूजा'को विश्वास पनि सम्बन्धित हुन आएको अनुमान गर्न सकिन्छ । महिलाहरूले गर्नुपर्ने

ऋषिपञ्चमी कृत्यमा रजस्वला दोष निवारणको विश्वाससँग ऋषिपूजन जोडिएको र रजस्वला स्वभाव महिलाहरूको सन्तान प्रजननसँग सम्बन्धित हुनाले पनि विशुद्धवंश प्रस्तार उद्देश्य रहेको बुझिन्छ ।

**सप्तऋषिको स्वरूप**

सप्तर्षिको सर्वसाधारण परिचय नृसिंहप्रसादबाट उद्धृत श्री तत्त्वनिधि (पृ. ९३) बाट ज्ञात हुन्छ । सो स्रोतले दिएको सप्तर्षिको साधारण स्वरूपको विवरण यसप्रकार छः-

उदासीनास्सोपवीता कमण्डल्वक्षसूत्रिणः ।

जटिलाश्श्मश्रुलाश्शान्ता आर्सिना ध्यानतत्पराः ॥

सप्तर्षयो वसिष्ठस्तु कार्यो भार्यासमन्वितः ॥

**सप्तर्षिहरूको ध्यान**

श्री तत्त्वनिधि (पृ. ९३-९४) मा उद्धृत नृसिंहप्रासाद नामक ग्रन्थले प्रस्तुत गरेको सप्तर्षिहरूको ध्यान (वा स्वरूप) तल उद्धृत गरिएको छः-

**१. गौतम :**

**रहूगणात्मजं शान्तं त्रिपुण्ड्राङ्कितमस्तकम् ।**

**अक्ष्यस्रक्कुण्डिकादण्डान् दधानं गौतमं भजे ॥**

**(कनकवर्ण)**

**२. भरद्वाज :**

**भरद्वाजं महान्तं सुशीलापतिमूर्जितम् ।**

**अक्षस्रग् दण्डहस्तं च मुनिमाङ्गिरसं भजे ॥**

**(श्यामवर्ण)**

**३. विश्वामित्रः**

**हिरण्यगर्भसदृं जटामुकुटधारिणम् ।**

**कुमुद्वतीपतिं शान्तं विश्वामित्रं भजाम्यहम् ॥**

(पीतवर्ण)

**४. काश्यपः**

**ध्यायेन्मरीचितनयं जटावल्कलधारिणम् ।**

**जपाध्यस्रग्धरं पत्नीसहितं मुनिपुंगवम् ॥**

**(कृष्णावर्ण)**

**५. जमदग्निः**

**शान्तं जितारिषड्वर्गं भृगुपत्रं महाद्युतिम् ।**

**दण्डाध्यसूत्रपाणिं च जमदग्निं नमाम्यहम् ॥**

**६. वसिष्ठः**

**दयासिन्धुं मित्रावरुणसम्भवम् ।**

**स्रग्दण्डपाणिं वरदं वसिष्ठं प्रणमाम्यहम् ॥**

**(सितवर्ण)**

**७. अत्रिः**

**विरिञ्चितनयं देवं साध्यसूत्रकमण्डलुम् ।**

**अनसूयापतिं शान्तमत्रिं निष्कल्मषं भजे ॥**

**(असितवर्ण)**

---

१. कुलचन्द्र गौतम (सं), अमरकोशः, पृ. १४२.

१. ऐजन

३. मूल श्लोक यस्तो छः-

तपोनिर्धूतपाप्मानो याधातथ्यभिधायिनः ।

वेदवेदाङ्गतत्वज्ञा ऋषयः परिकीर्तिताः ॥

४. ऐजन, पृ१४३.

५. उपाकर्मणि चोत्सर्गे यथाकालं समेत्य च ।

ऋषीन् दर्भमयान् कृत्वा पूजयेन्तर्पयेत्ततः ॥ सत्कर्मरत्नावली, पृ. १५६.

**सन्दर्भ ग्रन्थ** आचार्य, रामनाथ कोइराला, दामोदर (सं.) सत्कर्मरत्नावली, (श्री ५ महाराजाधिराज गीर्वाणयुद्धवीरविक्रम शाहदेव रचित), उत्तरार्ध, काठमाडौं, वि.सं. २०२९. ओइयर, मुम्मडि कृष्णराज (सं.), श्री तत्वनिधिः, खेमराज श्री. कृष्णदास, मुम्बई, वि.सं. १९५८ गौतम, कुलचन्द्र (सं.) अमरकोशः, नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, काठमाडौं, वि.सं. २०२६ मिश्रा, वंशीधर (सं.), श्रावणीप्रयोगः, माष्टर खेलाडीलाल एण्ड सन्स, काशी, वि.सं. २००३. मिश्र, मुकुन्दवल्लभ (सं.), कर्मठगुरुः, मोतीलाल बनारसीदास, वाराणसि, ई. १९७९. शर्मा, विश्वनाथ (सं.) श्रीव्रतराजः पंडित माधवाचार्य

६. यस व्रतको बेला बोल्नु पर्ने निम्न संकल्पवाक्य अनुसारः-

**मया ज्ञानतोऽज्ञानतो वा रजस्वलावस्थायां कृतसंपर्कजनितदोषपरिहारार्थ मरुन्धतीसहितकश्यपादिसप्तऋषिप्रीत्यर्थं ऋषिपूजनमहं करिष्ये ॥**

# ऋषितर्पणी – एक संक्षिप्त परिचय

## (जनैपूर्णिमाले संयमको सन्देश बोकेको छ)

मानव केवल भौतिकतामा मात्र बाँच्न सक्दैन। उसमा अध्यात्म र अधिदैवको प्रभाव पनि जन्मभन्दा पूर्वदेखि नै रहँदै आएको हुन्छ। केवल इन्द्रियादिजन्य भौतिक सुखले केही क्षण सुख त देला तर मनको निग्रह नगरी आत्मानुभव हुन सक्दैन । आत्मानुभव बिना चरमानन्दको अनुभूति पनि प्राय: असम्भव सिद्ध हुन्छ । भौतिक जगत्को दृश्यमान पिण्डमय वस्तु नाशवान् त हुन्छ नै तर त्यसको अस्तित्व र सत्ताको आभास हुनुमा पक्का पनि कुनै अदृश्य शक्तिको हात हुनु पर्दछ भन्दै हाम्रा समादरणीय प्रात:स्मरणीय पूर्वज ऋषिहरूद्वारा गहन चिन्तन, मननद्वारा त्यसको अन्वेषण, गवेषण गरेको र त्यसको अस्तित्व स्वीकारेको तथ्य हाम्रा वेद, पुराण, स्मृतिग्रन्थ एवं महाभारत आदि ज्ञानप्रदायक ग्रन्थमा देखिन्छ। त्यही तत्त्वको आधारमा वा आदेशलाई पालना गरी सूर्य, चन्द्र, वायु, मेघ इत्यादि चल्दछन् भन्ने उद्‌घोष भगवान्‌को वाणीद्वारा गरिएको छ । यही क्रममा सूर्य एवं चन्द्र पनि आ-आफ्नो मार्गमा घुम्दै जाँदा विभिन्न तिथिहरूको उत्पत्ति हुन्छ । ती तिथिहरू कृष्ण पक्ष र शुक्ल पक्षमा गरी तीसवटा हुन्छन् । त्यसमा पनि पर्वरूपमा चिनिने तिथि पूर्णिमा र औँसी देखिन्छन् । पूर्णिमा तिथि चन्द्रमाको कलाको पूर्णताको द्योतक हुन्छ भने अमा (औँसी) अल्पताको द्योतक मानिन्छ र प्रत्यक्षत: यो दृश्य पनि हुन्छ ।

जब चन्द्रमाको प्रवेश श्रवण नक्षत्रमा पूर्णिमाको दिन हुन्छ तब श्रावण मास पर्दछ। त्यो चान्द्रमानानुसार हुन्छ । सबै किसिमका धार्मिक कृत्य सम्पादनमा चान्द्रमानको विशेष महत्त्व रहेको देखिन्छ ।

**स्मरेत् सर्वत्र कर्मादौ चान्द्रं संवत्सरं सदा ।**
**नान्यं यस्माद्वत्सरादौ प्रवृत्तिस्तस्य कीर्तिता ॥**

श्रावण शुक्ल पूर्णिमा जनै पूर्णिमाका नामले प्रसिद्ध छ । यो चाड पर्वका रूपमा मनाइने संस्कृति हाम्रो रहिआएको छ । संस्कृतिको जीवन्तता नै आफ्नो जीवन हुन्छ। यस दिनमा कुम्भेश्वर, गोसाइँकुण्डलगायत विभिन्न ठाउँमा मेला लाग्ने गर्दछ । हजारौँ भक्तजन स्नान, दान गर्न आउने-जाने क्रम धेरै पहिलेदेखि नै चलिआएको छ। यस पर्वमा विशेषत वर्षाको समयमा खेतबारीमा काम गर्दा लागेको थकाइ एवं चिसोबाट मुक्त हुन क्वाँटी (अनेक थरिका गेडागुडी मिसाई बनाएको तरकारी विशेष) खाने परम्परा पनि हामीमा रहिआएको छ। यस दिनमा नै भ्यागुता, गँगटा आदिको पनि सम्मान गर्ने क्रममा खेतमा लगी दाल, भात, तरकारी राख्ने चलन पनि नेवारी समाजमा देखिन्छ। आपस आपसको बन्धुत्व, ममता, भगिनीत्व कायम गर्न तराईतिर (विशेष मधेशमा) राखी बाँध्ने परम्परा पनि रहेको छ भने पहाडतिर तीनवटा धागाको डोरो बाँध्ने र जनाई लगाउने परम्परा रहेको देखिन्छ ।

यसका बारेमा कथन पनि पाइन्छ । पहिला प्रल्हादको वंशमा वलि नामका राजा

भए। उनी अत्यन्त दानी थिए। दान र कीर्ति एवं शौर्यकर्मद्वारा अविजित बनेका र यश प्राप्त गरेका हुँदा देवताले पनि इन्द्रासनसम्म त्याग्नु परेको थियो। त्यस क्रममा हारेका सबै देवगणहरू मिली भगवान्का सामु प्रकट भई सो वृत्तान्त भन्ने काम गरे। त्यसपछि भगवान्ले आश्वासन दिँदै इन्द्रासन फिर्ता गराइदिने प्रतिज्ञा गर्नुभयो । कश्यप एवं अदितीलाई छोराको रूपमा प्राप्त हुने पूर्वसङ्कल्पानुसार शुभ समयमा आई 'वामन'रूपमा अवतरित हुनुभयो। व्रतबन्धकर्म गरी जनाई, कौ पीन, कन्धनी, कमण्डलु, भिक्षापात्र, छाता, दण्ड आदि (जुन वस्तुहरू देवविशेषबाट प्राप्त भएका थिए) धारण गरी बलिले विश्वजित यज्ञ गरेका ठाममा जाने काम गर्नुभयो । यसरी आएका ब्राह्मण बालक त्यसमा पनि पुड्को (वामन) तर अतीव तेजस्वी देखिएका कारण बलिको चित्त अत्यन्त गद्गद् भई केही मागिदिनको लागि इच्छा प्रकट भयो । भगवान्ले अत्यन्त संयम भई तीन पाद पृथ्वी माग्ने काम गर्नुभयो र बलिले दिनको लागि तयार हुँदा शुक्राचार्यले सम्झाउने काम गरे । तर पनि गरिएको संकल्पअनुसार ती ब्राह्मण कुमारलाई पृथ्वी (तीन पाउ) दान गर्न थाले । यस अवस्थामा भगवान्ले पनि शरीरलाई विराटमय बनाई स्वर्गादिलोक एवं पृथ्वीमा दुई पादले विराजमान हुनुभयो र तेस्रो पाउ राख्ने ठाउँ नहुँदा शिर समर्पण गरेका हुँदा भगवान्को चरणकमल प्राप्त भई सुतल लोक प्राप्त भयो र त्यहाँ द्वारपालको काम गर्ने प्रतिज्ञा भगवान्ले गर्नुभयो र तदनुसार नारायण सधैँ रहन थाल्नुभयो। उता वैकुण्ठमा नारायणको खोजी गर्ने क्रममा लक्ष्मी सुतलमा पुग्नुभयो तर ब्राह्मणीको रूपमा । यसरी पुगेर धर्म भगिनीको रूपमा रहने प्रस्ताव राख्नुभयो। बलिले पनि आफ्नो बहिनी नभएकोले मन्जुर गरे । श्रावण महिनाको पूर्णिमाका दिन बलिलाई राखी (पोटलिका) बाँध्ने काम गर्नुभयो र अत्यन्त खुशी भएका बलिले वरदानको लागि इच्छा प्रकट गर्दा लक्ष्मीले संकोचका साथ घरमा नभएको वस्तु नारायणको माग गर्नुभयो र बन्धनयुक्त (प्रेम बन्धन) भएकाले बहिनी मानिएकी लक्ष्मीलाई नारायण दिने काम गर्नुभयो। यसरी बलि राजा एवं महालक्ष्मीको भ्रातृभगिनीत्व सम्बन्ध रहेकोले अद्यावधि राखी वा डोरो बाँध्ने चलन रहिआएको छ र प्रत्येक घरमा वा मन्दिरमा गई डोरो बाँध्ने (मन, कर्म र वचनद्वारा सन्मार्गमा बढ्न प्रतिज्ञारत रहने कर्म) कार्य गरिन्छ र ब्राह्मणले पनि डोरो बाँध्दा यो मन्त्रको उच्चारण गरेको पाइन्छ ।

**येन बद्धो बलिराजा दानवेन्द्रो महाबलः ।**
**तेन त्वां प्रतिबद्ध्नामि रक्ष मा चल मा चल ॥**

यसरी सत्कर्ममा, सन्मार्गमा, प्रतिज्ञारत भई अगाडि बढ्न र स्थिर रहनको लागि सन्देश यो सूत्र (रक्षासूत्र) ले दिएको पाइन्छ ।

यो श्रावण शुक्ल पूर्णिमालाई 'ऋषि तर्पणी', श्रावणी-उपाकर्म गर्ने दिन भनेर पनि चिनिन्छ । व्रतबन्ध कर्म गरेका र अध्ययन मार्गमा लागेका व्यक्तिहरूलाई पुनः आफ्नो प्रतिज्ञा र मार्गलाई सम्झाउने दिन पनि यही हो । यस दिनमा यथाशक्य मध्याह्नकालमा वा प्रातःकालमा नदी, तलाउ, पँधेरो, धारा इत्यादि जलाशयमा गई नित्य शौचकर्म गरी, नित्यकर्म गरी स्नान गर्ने गरिन्छ । यसरी स्नानमा सरिक हुनको लागि पूर्व दिनमा एक मात्र हविष्यान्न (चोखो अन्न) खाएर, कपाल, दारी, नङ् काटी वा पूर्णरूपमा नै खौरेर शुद्ध भई उपवास बस्ने काम गरिन्छ । गरिष्ठान्नको प्रयोग उपवासमा वर्जित मानिन्छ। स्नान गर्न ठीक (उपयुक्त) स्थानको चयन गरी त्यहाँ गएर पृथ्वी, तीर्थादिको स्मरणपूर्वक गाईको दूध, दही, गोबर, खरानी (भस्म), गोमूत्रद्वारा समन्त्रक वा थाहा नभए अमन्त्रक नै भए पनि स्नान गर्ने गरिन्छ। स्नान गर्दा पहिले जौ-तिल-कुश लिई संकल्प गरिन्छ। तत्पश्चात् गृह्यसूत्रोक्त विधानबमोजिम स्नान गरिन्छ र बाहिरी शरीरको शुद्धि गरिन्छ। भित्री मन (अन्तःकरण) को शुद्धिका लागि स्नानान्तरमा प्राणायाम (हृदयलाई विशाल बनाउने कर्म) गरी विद्या, बुद्धि एवं स्वस्थताको लागि सूर्यदेवको उपासना वा स्तुति गरिन्छ । स्नान कर्म सिद्ध भएपछि काँचो धागोद्वारा विधिपूर्वक तयार पारिएको जनाईलाई त्यसमा भएका नवतन्तुका विशेष देवताको पूजा एवं जनाई अभिमन्त्रण गर्ने कर्म गरिन्छ । यसमा चलनानुसार देव एवं देवी तथा पितृगणको तृप्तिका लागि हवन गर्ने परम्परा पनि रहिआएको छ ।

'ऋषि तर्पणी' भन्ने बित्तिकै ऋषिलाई तर्पण गर्ने कुरा स्वतः सिद्ध हुन जान्छ। ऋषि तर्पणपूर्व सप्तर्षिको विशेष पूजा एवं ऋषिमा यज्ञोपवीत (जनाई) दान गरिन्छ र हाम्रा पूर्वजका त्यो दिव्य ज्ञान शक्ति एवं प्रबल दृढ भक्ति र आत्मविश्वासको स्मरण र तदनुकूल आचरणका लागि ऋषिको सम्झना एवं तृप्तिमा तर्पण र पितृको सम्झनामा पितृतर्पण (अधिकार प्राप्त भएका व्यक्तिद्वारा मात्र) र पितृमा भगवद्भावको स्मरण गरी प्रज्ञा, शौर्य र आत्मबलको आकाङ्क्षामा अनुनय र विनयपूर्वक जनाई दान गर्ने गरिन्छ । यसले 'महाजनो येन गता सपन्था' भन्ने वाक्यलाई सार्थकतामा बदल्छ ।

ऋषितर्पण एवं हवन गरी पूर्व पढिएको, हासिल गरिएको दिव्य ज्ञानशक्तिलाई सुषुप्तबाट जाग्रततिर उठाउन वेदाध्ययन गर्ने गरिन्छ । अनन्त ज्ञानको निधिरूप वेद ज्ञानको सन्देशवाहक हो । ज्ञानको उपयोग एवं अक्षुण्णताका लागि वेद, पुराण वा अन्य पुस्तकको अध्ययन त्यस दिन गर्ने गरिन्छ। 'ऋषयो मन्त्र द्रष्टारः' भनिएकोले गहन चिन्तन, मनन गरी उतार गरिएको ज्ञानसम्पदाको वितरण ठीक ढङ्गबाट गर्नु पर्ने र हाम्रा पूर्वजको सपनालाई साकार बनाउन तन, मन र धनले वा मन, कर्म र वचनले एकाकार भई दृढ संकल्पमा स्थिर रहनको लागि श्रावणी उपाकर्म वा जनैपूर्णिमा वा ऋषितर्पणीले सन्देश दिएको कुरालाई नकार्न मिल्दैन र त्यसअनुरूप हरेक धार्मिक कृत्यमा महत्त्व राख्ने वा नैसर्गिक वैयक्तिक बल एवं बुद्धिको विकासार्थ सूत्ररूप जनाई डोरो लगाउने चलन पनि चल्दै आएको कुरा युक्तिसंगत नै देखिन्छ। यसरी ऋषितर्पणी वा जनाई पूर्णिमाले हिन्दु संस्कृतिमा सांस्कृतिक एवं धार्मिक महत्त्व राखेका कुरा सिद्ध हुन जान्छ ।

– उपेन्द्रप्रसाद भट्टराई
सहायक प्राध्यापक
वाल्मीकि विद्यापीठ (ज्योतिष विभाग)

# ऋषि सान्दीपन र महाकाल ज्ञान

**महाकाल्य रूपं सहितं सदैवं**
**क्रोधोन्मतां पूर्ण सदैव रूपं,**
**सर्वो सतां पूर्ण मदैव तुल्यं**
**एकोपि सूर्य भगवान् सदैवं ।**

भगवान् कृष्णको मुखबाट निस्किएको एउटा श्लोक हो यो । भगवान् ती सबै हुन् जसले साधनाहरूमा सिद्धि प्राप्त गरेका छन् । म कृष्णलाई भगवान् मान्दछु, तपाईं पनि मान्नुस् । तर भगवान्को तात्पर्य यो हो कि जसमा पूर्ण ज्ञान र चेतना छ, त्यो भगवान् हो । किनकि ब्रह्म भित्र छ भने ईश्वर हो, यदि छँदै छैन भने राक्षस भयो । यदि दुवै छैन भने हामी मनुष्य हौं, सामान्य जीवन बाँच्दछौं, विचरण गर्दछौं र अन्तमा मर्दछौं ।

यस श्लोकमा यो बताइएको छ कि एउटै सूर्य पनि पर्याप्त छ । भगवान् कृष्णको जीवनमा ज्यादै धेरै दुःख थिए तैपनि उनी तिनीहरूबाट परास्त भएनन् । उनले निश्चय गरे कि आफ्नो जीवनमा मैले यस्तो कार्य गर्नु छ जसबाट आउने पुस्ताले मलाई याद गरोस् । तपाईं-हामीजस्ता नै थिए कृष्ण । तर उनले आउने पुस्ताले सम्झने ग्रन्थ लेख्ने निश्चय गरे । गीताजस्तो ग्रन्थ आफैमा अद्वितीय छ । गीताको अर्थ हो जसलाई राम्ररी गाउन सकियोस् ।

**गीयत सः गीता ॥**

जसलाई राम्रोसँग गाउन सकियोस्, पढ्न सकियोस्– त्यो गीता हो । गीता पूर्णरूपले गेय होस् । यसलाई गाउँदा पूर्णरूपमा जुन आनन्द प्राप्त हुन्छ, आफै त्यो भित्र उत्रन्छ । हामीले गीतालाई पढ्यौं होला तर यसलाई गाएका भने छैनौं । गीता कृष्णले लेखे, घेरण्डले लेखे, अष्टावक्रले लेखे । कम्तीमा पचासजना ऋषिले गीता लेखे । सबै ऋषिले आ-आफ्ना गीतामा सुन्दर व्याख्या गरेका छन् । कृष्णरचित गीतामा कर्मयोगको व्याख्या छ– कर्म गर्दै रहनु पर्दछ र जे बनौं अद्वितीय बनौं भन्ने व्याख्या यसमा पाइन्छ । कृष्णको जीवनमा एउटै उद्देश्य थियो– कौरव-पाण्डव लडे लडिरहुन्, आफ्नो जीवनमा मलाई सफलता पाउनु छ ।

श्रीकृष्ण सान्दीपन आश्रममा गए । किन गए सान्दीपन आश्रममा ? के बीचमा कुनै ऋषिमुनि थिएनन् ?

गुरुसँग त्यहाँ भेट हुन्छ जहाँ ज्ञान हुन्छ । जहाँ गुरुले तन्त्रको व्याख्या पूर्णरूपमा गरेर बुझाओस्, त्यो ज्ञान हो । सान्दीपन आश्रममा गएर कृष्णले गुरुलाई प्रणाम गरे र भने– म यदुकुलको बालक हुँ । हजूरसमीप ज्ञान प्राप्तिका लागि आएको छु । म यस्तो ज्ञान चाहन्छु जुन आफैमा अत्यन्तै विलक्षण होस्, अमूल्य होस्, अतुलनीय होस् ।

सान्दीपन ऋषि त्यस समयका उच्चकोटिका ज्ञाता थिए– तन्त्रका, मन्त्रका, योगका, दर्शनका, मीमांसाका । ऋषि त त्यस बेला अरु पनि धेरै थिए । हेर्‍यौं भने रघुका

गुरु पनि वशिष्ठ थिए, रामका गुरु पनि वशिष्ठ थिए । रामका पुत्र लव-कुशका गुरु पनि वशिष्ठ नै थिए । राजाहरू मर्दै गए तर गुरु यति धेरै पुस्तासम्म जीवित रहन सक्नुमा गुरुमा रहेको तपस्याको अंश, शक्ति, क्षमता हो ।

कृष्णले सान्दीपनलाई भने– म केही बन्न चाहन्छु, यस्तो ज्ञान मलाई चाहिएको छ । मलाई गएगुज्रेको जीवन बाँच्नु छैन ।

गुरु सान्दीपनले भने– म अवश्यै ज्ञान दिन्छु । तिमी यति टाढाबाट आएर ज्ञान मागिरहेका छौ । तर अहिलेलाई भने जंगलमा गएर दाउरा लिएर आऊ । राजाका छोरा, राजमहलमा जन्मिएका कृष्ण जंगलमा दाउरा खोज्न हिँडे ।

कृष्णले भने– मलाई केही बन्नु छ, अद्वितीय बन्नु छ । एकदिन मात्र होइन, दस वर्ष जंगलमा गएर काठ ल्याउन परे पनि, गाई चराउन जान परे पनि म गर्नेछु ।

तपाईंले त्यस कृष्णको व्यक्तित्वलाई नियाल्नुहोस्, पल-पल रगत-पसिनाले सिँचेर कसरी त्यस उच्च स्थानमा पुगे जहाँ हामी उनलाई स्मरण गर्छौं । कृष्णलाई दाउरा चिर्न लगाएर गुरु हेर्न चाहन्थे कि उनमा शक्ति र क्षमता कस्तो छ, गुरुप्रति कत्तिको श्रद्धा र विश्वास छ ? कृष्णले गाई चराए, आश्रममा नित्य कुचो लगाए, स्वयं आफैले खाना बनाएर सान्दीपन र उनकी पत्नीलाई खुवाए किनकि उनले निश्चय गरेका थिए कि जीवनमा केही प्राप्त गर्नु छ। उनले कैयौं प्रकारका तन्त्र विद्या सिके, कैयौं मन्त्र विद्याहरू सिके, योग सिके, जो सान्दीपनसँग थिए, ती सबै सिके ।

कृष्णले सान्दीपनसँग भने– मलाई आकाशगमन गर्न मन लागे गर्न सकूँ, जलगमन गर्न मन लाग्यो भने त्यो पनि गर्न सकूँ र शक्ति, क्षमता यति आओस् कि आउने हजार पुस्ताले मलाई स्मरण गरोस्, म छु त जीवन छ– बस म यत्ति नै चाहन्छु हजूरसित ।

जब कृष्ण ज्ञान प्राप्त गरेर मथुरा फर्के तब उनका चारैतिर शत्रु नै शत्रु थिए । जरासन्ध र अन्य सबै शत्रुहरूको चिन्तन एउटै थियो कि कुनै प्रकारले यस व्यक्तिको वध होस् । उनीहरूले आफूलाई प्रत्येक पल सचेष्ट राखे । बाध्य भएर कृष्णले मथुरालाई छोडेर हिँड्नुपर्‍यो । यदि कृष्ण प्रेमी भइदिएको भए र प्रेममा नै पागल भएको भए वृन्दावन

**महाकालबाट महाकाली बने जसलाई हामी याद गर्दछौं। कालको अर्थ हो कि पूर्वको जीवन, वर्तमान जीवन र आउने जीवनलाई हेर्नु । कृष्णले देखे– यसप्रकार पांडवलाई विजय प्राप्त हुनेछ ।**

जान्थे । मथुरा र वृन्दावनबीच छ किलोमीटरको दूरी छ । तर जीवनको यो उद्देश्य थिएन ।

कृष्ण मथुराबाट सीधै द्वारिका गए । द्वारिकामा त्यहाँका आदिवासीहरूका साथमा राज्य स्थापित गरे । उनका कष्टहरूलाई हेरौं । महाभारत युद्ध हुँदा एकातिर पाँच पाण्डव थिए । अर्कातिर उभिएका अट्ठार अक्षौहिणी सेना, कौरव, दुर्योधन, दुःशासन, द्रोणाचार्य, अश्वत्थामा सबैको एउटै चिन्तन थियो– जसरी भए पनि पाण्डवलाई समाप्त गरौं । तर कृष्ण त्यहाँ पनि युक्तिपूर्वक उभिए उनीहरूका बीच– म यी पाण्डवहरूको पक्षमा छु, सत्यको साथमा छु, मैले शस्त्र उठाउँदिन ।

कृष्णसँग सान्दीपनले दिएको ज्ञान थियो । सान्दीपनले उनलाई महाकाल साधना दिए । यस साधनासम्पन्न साधकको अहित कसैले पनि गर्न सक्दैन, सम्भव पनि छैन । मृत्यु त धेरै टाढाको कुरा हो ।

महाकालबाट महाकाली बनिन् जसलाई हामी सम्झन्छौं । कालको अर्थ हो कि अघिल्लो जीवन, वर्तमान जीवन र आगामी जीवनलाई हेर्नु । कृष्णले देखे– यसप्रकार पाण्डवलाई विजय प्राप्त हुनेछ । यदि तपाईंले पनि यस्तो क्षमता प्राप्त गर्नुभयो भने तपाईंलाई अत्यन्तै आश्चर्य हुनेछ र तपाईंले देख्नुहुनेछ कि तपाईंको कस्तो शानको जीवन थियो, अहिले आएर कहाँ फँस्नुभएको छ, कस्तो कठिनाइमा फँस्नुभएको छ । गुरुका साथमा संन्यासी जीवनमा थिएँ, कहाँ आएर फँसें भन्ने लाग्नेछ। तपाईंलाई एकछिन पनि आफ्नो घरमा बस्न मन लाग्ने छैन । त्यो दिव्य शक्ति पनि गुरुले तपाईंलाई दिन सक्छन् । त्यो साधना पनि गराउन सक्छन् जसको माध्यमबाट ती सबै सम्भव हुन जान्छन् । कृष्णले भने– मलाई कुनै पनि प्रकारको सिद्धि चाहिएको पनि छैन । तर मलाई त्यो महाकाल ज्ञान चाहिएको छ जुन युगौंयुगदेखि लुप्त रहेको छ ।

त्यो ज्ञान सान्दीपनको समयसम्म लुप्त भइसकेको थियो । केवल सान्दीपन गुरुले मात्र त्यो महाकाल ज्ञान जान्दथे । उनमा यो ज्ञान नहुँदो हो त कृष्ण यति टाढा अवश्यै यस ज्ञान प्राप्तिका लागि आउने थिएनन् । उनलाई यस कुराको ज्ञान पनि थियो कि बिना महाकाल ज्ञान जीवनको उच्चता छैन ।

कुनै शत्रु कृष्णको नजिक टिक्न सकेन, मृत्यु उनको नजिक आउनै सकेन, मृत्यु उनमाथि हावी हुनै सकेन । यसकारण हावी हुन सकेन कि उनले पूर्णताका साथ महाकाल साधना सिद्ध गरेका थिए । यसै महाकालबाट महाकाली स्वरूप उत्पन्न भयो । यदि महाकालीको चित्रलाई हेर्ने हो भने पैतालामुनि पुरुष दबिएको छ अर्थात् काल दबिएको छ । महाकाल त पूर्णरूपमा काललाई आफ्नो आँखामा बसाउने क्रिया हो, शक्ति हो, क्षमता हो, पौरुष हो, आफैमा तेजस्विता हो । यो यस्तो किसिमको क्षमता हो कि जबसम्म जीवित रहने हो, रहन सकौं र शत्रु जीवनमा रहँदै नरहोस् ।

त्यो काल ज्ञान मन्त्र के थियो, काल ज्ञान सिद्धि के थियो ? कतै तपाईंले पढ्नु भएको छ ? के तपाईंलाई यस बारेमा थाहा छ ? कृष्णले साढे दस वर्षसम्म एउटै कुरालाई बारम्बार किन दोहोर्‍याए ? त्यस समयमा कृष्णले आफ्ना गुरुको छोराको मृत्यु हुँदा उसको प्राणलाई फर्काएर उसलाई जीवित तुल्याए । जुन गुरुले गर्न सकेनन्, त्यसलाई शिष्यले गरेर देखाइदिए किनकि गुरुले उनलाई पूर्ण काल ज्ञानको दीक्षा दिए, सफलता दिए र सर्वत्र अविजित रहने आशीर्वाद दिए ।

**(सद्गुरुदेवको प्रवचनबाट)**

# ऋषि स्तुति

विश्वामित्र वशिष्ठ वत्स भरत व्यासङ्गिरो गौतमाः
माण्डव्यात्रि पुलत्स्य धौम्य पुलहाऽष्टावक्र गर्गादयः ।
मार्कण्डेय विभाण्डकौ शुक शतानन्दाश्वलोद्दालका
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥१॥
यास्को गालव याज्ञवल्क्य जनकाजावाल्यगस्त्यादयो
भारद्वाज उतथ्य लोमशकृपाः सूतादय शौनकः ।
दुर्वासा भृगु भार्गवौ च कुशिकः शाण्डिल्य गार्ग्यायणौ
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥२॥
नन्दी नारद तुम्बुरु च कपिलोऽसौ वाष्कलौ देवलः
सिद्धास्ते सनकादयो रहुगणः कौडिन्य शिव्यादय ।
शृङ्गी गौतम शृष्य शृङ्ग मनवो मान्धातृ मेधा ध्रुवाः
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥३॥
शुक्रो दीर्घतमा दधीचिरूपमग्न्युः पिप्पलादादयो
वार्हस्पत्य कणाद पाणिनि वृहस्पत्यासुरोन्द्रादयः ।
शङ्खः पञ्चशिखः पराशर वृषा मेधातिथिर्मुद्गलो
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥४॥
मौद्गल्यौऽथ धनञ्जयौऽसित भरद्वाजा नलो धर्मराड
माण्डव्यासाङ्गिरसौ ययाति भरताः कण्वोऽथ हारीतकः ।
शक्ति कश्यप काश्यपौच्यवनको वात्सायनश्च ऋतु
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥५॥
वैशम्पायन पिप्पलायन वुधास्तौ जह्नु कात्यायनौ
गोरक्षो जमदग्नि जैमिनी शुनश्शेपाश्च सामश्रवाः ।
गार्ग्यः शाकल शाकटायन शकाः शाकस्य कौत्सादयो
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥६॥
भीष्मो भागुरि पिङ्गलौ च सगरो द्रोणः सहस्रार्जुनो
बुद्धो वामन कासकृत्स्न शबराः पाण्डव वरीषादयः ।
आपस्तम्ब पतञ्जली पुरुरवाः पुष्य पृथुः पाण्डवाः
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुन ः॥७॥
देवापिर्वरतन्तु शन्ततु गदा दाल्भ्योऽभिमन्युर्वसू
रैभ्यः सौभरि जैवली वलि मिथी वौधायनो नैमिषः ।
अश्वत्थाम विलेशयौ द्रुपदको नेमिः मृकन्डुर्यमो
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥८॥
आत्रेयो जनमेजय श्रवणकः स श्वेतकेतुर्लवः
काकुत्स्थश्च विकुक्षि सञ्जय महावीराः सुधन्वोदयः ।
श्वेताश्वो नचिकेत लक्ष्मण पुरु श्री क्षेमधन्वादयो
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥९॥
लौकाक्षी च वसन्तनो दयनकौ स ब्याघ्रपादोऽजय
शाल्वः शूर कुशध्वजाऽज विदुरास्तेवासुदेवादयः ।
ऋक्सेना ऋतुपर्ण कर्णक दिवोदासैकलब्यादयो
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥१०॥
प्रह्लादो डहरः सुभिक्ष ललितौ शुरः शिलादित्यको
बप्यो विक्रम भोज भर्तृहरयस्ते गोपिचन्द्रादयः ।
मानांशूदय नाग नीप मलयाः पृथ्वी प्रतापौ शिवौ
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥११॥
पैङ्गी भृङ्गि मरीचि कर्दम मुखाः कल्माषपादो यदु-
र्दुष्यन्तः सुरथ समाधि नहुषौ हषः प्रियादिव्रतः ।
अन्ये चापि तुलाधर प्रभृतयोऽलर्कश्च पारस्करो
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥१२॥
अग्नीध्रो हरिरग्नि बाहु सवनौ नाभिर्वसुः केतुमान्
ज्योतिष्मान् द्युतिमानिलावृत हिरण्मद्रम्यकाहव्यकः ।
पत्रः किम्पुरुषः कृशाश्व, ऋषभौ भद्राश्व मुख्याखिला
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥१३॥
पुण्यास्ते मनवश्चतुर्दश शुभास्ते वालखिल्यादय
इक्ष्वाकुः कुरु रन्तिदेव रघवो रामो दिलीपोंऽशुमान् ।
पाला पङ्क्तिरथो भगीरथ कुसौ नागाश्च सेनादयो
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥१४॥
सिंहाः लिच्छवि मल्लशाह सहिताश्चन्द्राश्च चोलादयो
गुप्तावर्धन वर्म देव सहजाः शाक्या शका विक्रमाः ।
चाणक्यश्चरकश्च सुश्रुत भटौ नागो नृगो माधवो
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥१५॥
अन्ये स्व स्व कृति प्रसिद्ध यशसो ब्रह्मर्षि राजर्षयः
शत्रुघ्नो भरतोऽथ लक्ष्मण वली कृष्णोद्धवौ सात्यकी ।
प्रद्युम्नोऽप्यसमञ्जसो वृष हरिश्चन्द्रौ नरेन्द्रादयोः
विश्वे वैदिक धर्म रक्षक ऋषि व्राताः सदा पान्तुनः ॥१६॥

आध्यात्मिक शक्ति अनुसन्धान संस्था सिद्धाश्रम शक्ति केन्द्रसम्बन्धी कुनै जानकारी वा यसका विविध कार्यक्रमहरूको बारेमा जानकारी चाहिएमा यस केन्द्रको प्रजापति लेप्र युनिटमा पत्राचार गर्नुहुन अनुरोध छ ।

पत्राचारका लागि लागि ठेगाना :
प्रजापति लेप्र युनिट
सिद्धाश्रम शक्ति केन्द्र
पो.ब.नं. १०५११, बसुन्धरा, काठमाडौँ

# ऋषिहरूको ज्ञानदृष्टिमा समस्याको समाधान

ऋषिहरूको सिद्धान्तलाई जति धेरै आफ्नो जीवनमा उतार्दछौँ ऋषि पूजन त्यत्ति नै सार्थक हुन्छ, त्यत्ति नै दिव्य, सुन्दर, मधुर हुन्छ। महापुरुषहरूलाई बाह्य पूजनमा त्यत्ति धेरै प्रीति हुँदैन जति उहाँहरूलाई आफ्नो सिद्धान्त प्रिय हुन्छ । हामीले ऋषिहरूको सिद्धान्तलाई मान्न थाल्यौँ भने उहाँहरूको पूजन भएको मानिन्छ। उहाँहरूको सिद्धान्त हो–जीव संसारको बन्धनबाट पार भएर आफ्नो निजस्वरूपलाई निहारोस्, आफ्नो आत्मस्वरूपमा विश्रान्ति पाओस्, स्वयं नाद जगाएर आफ्नो वास्तविक स्वरूपको अनुभव गरोस् ।

सुःख-दुःख, मान-अपमान, पुण्य-पाप कर्ताभावबाट हुन्छ र कर्ताभाव देहलाई 'म' मान्नाले हुन्छ । स्थूल तथा सूक्ष्म शरीरलाई 'म' र 'मेरो' मानेर गरिएको कर्म कर्तापनबाट बाँधिएको कर्म हो। 'म शरीर होइन, आत्मा हुँ'– यो जान्नु र आफ्नो आत्मभावलाई जाग्रत गर्नु ऋषिहरूको आदर तथा पूजन गर्नु बराबर हो ।

**कश्यपोऽत्रिर्भरद्वाजो विश्वामित्रोऽथ गौतमः ।**
**जमदग्निर्वसिष्ठश्च सप्तैते ऋषयः स्मृताः ॥**

सप्तर्षिहरूको स्मरण पातक नाश गर्ने, पुण्य आर्जन गर्ने, हिम्मत दिने हुन्छ । ज्ञान प्राप्त गर्नका लागि जुन महापुरुषहरूले एकान्त अरण्यमा निवास गरेर आफ्नो प्रियतम परमात्मामा विश्रान्ति पाए, यस्ता ऋषिहरू, आर्षद्रष्टाहरूलाई हाम्रो प्रणाम छ ।

जुन ऋषिहरूले राज्य गर्दागर्दै विश्रान्ति पाउनुभयो उहाँहरू राजर्षि कहलिनु भयो । जसले एकान्त अरण्यमा ब्रह्मचिन्तन गर्दागर्दै आत्म अमृतलाई पाउनु भयो, उहाँहरू ब्रह्मर्षि कहलिनु भयो र जसले आत्मपदलाई पाएर सदा सदाका लागि अमरतामा स्थित हुनुभयो उहाँहरू देवर्षि बन्नुभयो। ती ऋषिमुनिहरूको पावन स्मरण, चिन्तनले हाम्रो पनि उत्साह, उमङ्ग बढाउँछ, हाम्रो दृढता बढाउँछ ।

जो आत्मरामी संत हुनुहुन्छ उहाँको सहज संकल्पले सांसारिक प्राणीको अमाप कीर्ति एवं चिरस्थायी शान्तिको दान गर्न सक्छ। जसले आत्मामा विश्रान्ति पाउनुभयो यस्ता महापुरुषको सहज स्मरण र सान्निध्य मानव जातिको तमाम दुःखलाई हर्ने सामर्थ्य राख्दछ। यो अमोघ शास्त्र हो । मानवका प्रत्येक दुःख, विघ्न-बाधा र समस्याको समाधान ऋषिहरूको ज्ञानदृष्टिमा भरिएको छ । ऋषिहरूले मानिसहरूका कठिनाइहरूलाई जान्नुहुन्छ र उहाँहरूको महानतालाई पनि जान्नुभएको हुन्छ ।

ऋषिको दृष्टिमा तत्त्व-साक्षात्कार, परमात्मा प्राप्ति सहज छ, तर संसारीको दृष्टिमा त्यो दुर्लभ छ । जे आउँछ, जान्छ त्यो नश्वर हो । जे उत्पत्ति, स्थिति एवं नाशलाई निहार्दछ त्यो महेश्वरस्वरूप हो । जो इन्द्रियहरूलाई, मनलाई, बुद्धिलाई निहार्दछ त्यो द्रष्टास्वरूप मेरो आत्मा हो– ऋषिहरूको यस्तो दृष्टिलाई हामीले पनि अपनायौँ भने हाम्रो पनि जीवन सफल हुन्छ ।

स-साना कुरामा आफ्नो चित्त खिन्न नहोस्, यसमा ध्यान पुऱ्याउनु पर्दछ । हृदयको शान्तिको लागि बाहिरको तुच्छ भोगविलासको नालीमा गिर्नु हुँदैन अपितु आत्मविश्रान्तिको अमृतमा डुबिरहनु पर्दछ। अन्तर्यामी परमात्मालाई प्रेम गर्दै जाऔँ ।

अन्तर्यामी परमात्मालाई आफ्नो हृदयमा अनुभव गरेर त्यस परमात्मालाई निहार्नु हुने ऋषिहरूलाई पूरा विश्व नै भागवत्स्वरूप लाग्दछ । ती महापुरुष विश्ववाटिकालाई सुन्दर राख्नका लागि प्रकट हुनुहुन्छ । उहाँहरूको स्वनिर्मित विनोदले जनसमाजको कल्याण गर्दछ । संसारवाटिकालाई सुन्दर राख्नका लागि ती ऋषि महापुरुषहरूले अथक प्रयास गरिरहनु भएको छ ।

यस्ता ऋषि, ऋषिपत्नी र महान् ऋषितत्त्वलाई प्राप्त विदुषीहरूको स्मरण गरेर हाम्रो चित्तको चैतन्य स्वरूपमा, सोऽहंस्वरूपमा, आत्मस्वरूपमा जगाइदेऔँ । शरीरमा कहिले अड्किने हामी ? 'मेरो-तेरो'को भावनालाई कहिलेसम्म सत्य मान्ने ? यी सबै मनका कल्पना मात्र हुन्। राति सुत्दा मेरो-तेरो भन्ने सबै बिर्सिन्छ। समाधिमा पनि मेरो-तेरो रहँदैन । समाधिबाट उठेपछि पुनः नयाँ जगत् शुरु हुन्छ। यस मनको मायाबाट पार भएर आफ्नो आत्मामा विश्रान्ति पाऔँ। ऋषिहरूको प्रसन्नता, ऋषिहरूको आशीर्वाद, ऋषिहरूको अहैतुको कृपा हामीलाई सहज नै प्राप्त हुन्छ ।

एक क्षणको चित्तको विश्रान्ति विपुल सम्पत्तिभन्दा ज्यादा मूल्यवान् हुन्छ । चित्तको विश्रान्ति हाम्रो धन हो । बाहिरी धनको थुप्रो वास्तवमा हाम्रो होइन र हाम्रो काममा पनि आउन सक्दैन । त्यो त तिम्रो शरीरको लागि काममा आउँछ। हाम्रो लागि त चित्तको विश्रान्ति नै काममा आउँछ । तुच्छ वस्तुहरूको यति धेरै मूल्य आँक्नु हुन्न जसबाट परमात्म-विश्रान्ति बिग्रियोस्। धन कमाउनु, धनको उपयोग गर्नु र धनलाई जब छोड्न परे पनि छोड्न सक्ने क्षमताका लागि पूरा तयारी गर्नुपर्दछ । मृत्युले जबर्जस्ती छोडाउनुभन्दा पहिले नै हामीले ती वस्तुहरूप्रतिको ममता छोडेर अमर आत्माको सुखको आस्वादन गर्दै रहनु पर्दछ ।

मन-इन्द्रियहरूलाई शान्त गरेर परमात्माको ध्यान गर्नु सर्वधर्ममा श्रेष्ठ धर्म हो। इन्द्रियहरूलाई मनमा लीन गरौँ, मनलाई बुद्धिमा र बुद्धिलाई बुद्धिदाता परमात्मामा, शान्त प्रसादमा स्थिर गर्नु सबै धर्म र कर्ममा श्रेष्ठ धर्म र कर्म हो। जो यस्तो श्रेष्ठ धर्मको आचरण गर्दछ, त्यसमाथि ऋषिहरूको अहैतुकी कृपा बर्सिरहन्छ ।

जुन ऋषिहरूले हाम्रो जीवनबाट पाशवी विचारहरूलाई हटाएर हामीमा परमेश्वर स्वभाव जगाउने जुन प्रयास गर्नुभएको छ, जुन ऋषिहरूले हाम्रो विकासको लागि सहयोग दिएर समाजको उत्थान गर्ने चेष्टा गर्नुभएको छ ती ऋषिहरूप्रति कृतज्ञता व्यक्त गर्नु हामी सबैको कर्तव्य हो ।

**(ऋषि प्रसादबाट साभार)**

# अठासी हजार ऋषिका अध्यक्ष शुकदेव मुनि

शिवपुराणमा शुकदेवको कथा आउँछ । कथामा शुकदेव पहिले सुगा थिए । सुगाले गर्भभित्र नै बालकको रूप लिन पुग्यो । सुगा कसरी महिलाको गर्भभित्र पस्यो भन्ने कुरा पनि शिवपुराणमा उल्लेख भएको पाइन्छ ।

शिवपुराणमा कथा आउँछ– देवाधिदेव महादेवले पार्वतीलाई अमरकथा (अमर तत्त्व) भनिरहनु हुँदा संयोगवश एउटा नवजात सुगाले त्यस अमरकथालाई सुन्न भ्याएको हुन्छ । कसैलाई सुनाउनै नहुने अमरकथा सुगाले सुनेपछि महादेवले सुगालाई मार्न त्रिशूल फ्याँक्नु भयो । सुगा ज्यान बचाउन उड्यो, पछि पछि त्रिशूल थियो । एक ठाउँमा पुलत्स्य ऋषिकी पत्नी भगवान् सूर्यलाई अर्घ्य दिइरहेकी थिइन् । त्यतिबेला सुगा ऋषिपत्नीको मुखभित्र छिर्‍यो । त्रिशूल रोकियो । भगवान् शिव पनि त्रिशूलको पछि-पछि आउनुभयो । शिव भगवान्‌ले ऋषिपत्नीलाई भन्नुभयो– मेरो शत्रु तिम्रो घरमा छ, त्यसलाई बाहिर निकाल । उसलाई समाप्त पार्नु अत्यन्तै जरुरी छ ।

ऋषिपत्नीले भनिन्– मैले तपस्या गरेकी छु, म ऋषिपत्नी हुँ । ऊ पेटबाट बाहिर निस्कन्छ भने हजूरले मारिदिनु होस् । म उभिएकी छु, हजूरले त्रिशूलले मलाई पनि मार्न सक्नुहुन्छ ।

भगवान् शिवले भन्नुभयो– म स्त्रीलाई त मार्न सक्दिन ।

ऋषिपत्नीले भनिन्– जब मेरो मुखबाट बाहिर निस्कन्छ तब मारिदिनु होस् ।

शिवले भन्नुभयो– म तिम्रो घर बाहिरै बसिरहन्छु, कुनै भरोसा छैन कहिले निस्कन्छ । म यहीँ धुनी लगाउँछु ।

भगवान् शिव त्यहीँ धुनी जगाएर बस्नुभयो । नौ महिना बित्यो, दस महिना बित्यो, एघार महिना पनि बित्यो । यसप्रकार तेह्र, चौध महिना पनि बिते ।

पन्ध्र महिनामा ऋषिपत्नीले पेटभित्रको सुगालाई सोधिन्– तिमीलाई केही कष्ट त भइरहेको छैन ?

भित्रबाट आवाज आयो– माता, एकदमै आरामले बसिरहेको छु । भित्र तपाईंलाई कुनै कष्ट महसुस भइरहेको भए म बाहिर निस्कन्छु । भगवान् शिवले मलाई मार्न सक्नुहुन्न किनकि मैले अमरकथा पूरा सुनिसकेको छु । अमरकथा सुनेको हुनाले म मर्दिन– यो निश्चित छ । भगवान् शिवको त्रिशूलले मेरो केही पनि बिगार्न सक्दैन । तपाईं चिन्ता नगर्नुहोस् ।

ऋषिपत्नीले भनिन्– मलाई केहीको पनि चिन्ता छैन । तिमी भित्रै बसिराख । बस ! आँगनमै भगवान् शिवको सधैँ दर्शन भइरहेको छ । पहिले त पूजा, अर्चना गर्नु पर्दथ्यो, अहिले त यही बहानाले भए पनि बिहान-बेलुकी दर्शन पाइरहेकी छु ।

पूरा छ वर्षसम्म सुगा भित्रै बसिरह्यो ।

शिवले पुन: भन्नुभयो– शत्रुलाई बाहिर निकाल ।

ऋषिपत्नीले भनिन्– म निकाल्ने को हुँ र ? यो काम त ब्रह्मको हो, जब ब्रह्म चाहन्छ तब यो सम्भव छ। यदि ऊ निक्लिएमा पनि हजूरले उसलाई मार्न सक्नुहुन्न किनकि उसले पूरै अमरकथा सुनेको छ ।

शिवले भन्नुभयो– यो सत्य कुरा हो ।

ऋषिपत्नीले भनिन्– त्रिशूलले उसको केही बिगार गर्न सक्दैन। हजूर आफ्नो समय किन बर्बाद गरिरहनु हुन्छ ? धुनी जगाएर मेरो घरअगाडि खरानी फैलाउनु भएको छ । भूतगण घुमिरहेका छन्, नाचिरहेका छन् । न कोही भेट्न भित्र आउन सक्छन्, न कोही बाहिर जान नै सक्छन् । हजूर त यहाँ निर्विघ्न बस्नुभएको छ । हजूरले हामीलाई छ वर्षको सजाय किन दिनुभएको हो ? त्यसपछि उनीले सुगालाई बाहिर निस्कन अह्राइन् । सुगाले छ वर्षसम्म गर्भभित्र रहँदा मानिसको रूप लिइसकेको थियो र त्यो मानिस अरु कोही नभएर शुकदेव मुनि थिए। मानवरूपमा जन्मिना साथ उनी ज्ञान प्राप्तिका लागि हिँडे । उनको पछि-पछि उनका बुबा पुलत्स्य ऋषि दौडे, आमा दौडिन्। उनीहरूले शुकदेवलाई सम्झाउँदै भने– बाबु शुकदेव ! तिमीले यो के गर्न लागेको ? कहाँ जान लागेको ? प्रौढावस्थामा बडो मुश्किलले तिमीलाई पाएका थियौं । हामीलाई छोडेर अब कहाँ जान लागेको ?

शुकदेवले भने– माता के हो, पिता के हो ? यी त केवल निमित्त मात्र हुन्छन्, जन्म दिने आधार हुन्। हजूरहरू पनि केवल निमित्त हुनुहुन्छ, मेरो जीवनको कर्मलाई पूर्ण गर्ने आधार हुनुहुन्न। मलाई जन्म दिनुभयो। यसका लागि म ऋणी छु, तर हजूरहरूले मेरो जीवनको कर्मलाई संचालन गर्न सक्नुहुन्न ।

त्यो ज्ञान मलाई हजूरले दिन सक्नुहुन्न, त्यसका लागि त मैले कुनै गुरु खोज्नुपर्दछ। यदि म गुरु कहाँ जाँदिन भने म एक सामान्य व्यक्ति भएर बाँच्न विवश हुनेछु। म यस्तो चाहन्न । म त अठासी हजार ऋषिको सभापति बन्न चाहन्छु, म केही बन्छु भने अद्वितीय बन्छु, सामान्य व्यक्तित्व बन्दिन ।

पछि गएर शुकदेव भागवतकार बने । जब 'नैमिषारण्य'मा अठासी हजार ऋषिहरू वेदादि सम्बन्धमा चर्चा गर्नका लागि एकत्र भए तब सभाका अध्यक्ष कसलाई बनाउने भनेर विवाद उत्पन्न भयो। पुलत्स्य, वेदव्यास, जमदग्नि सबै ऋषि विद्वान् थिए । सबैले आ-आफ्ना सुझाव दिन लागे । तब सबै वरिष्ठ ऋषिहरूले निर्णय गरे कि सबैभन्दा ज्ञानी शुकदेव मुनि हुन्। उनको उमेर बाह्र वर्षको मात्रै भए पनि उनलाई पाँचै विद्याको पूर्ण ज्ञान छ र उनले सबै ऋषिहरूलाई उपदेश दिन सक्छन्, वादविवाद भएमा पनि निर्णय गर्न सक्छन्, शुकदेव मुनिभन्दा ज्ञानी पुरुष अहिले यस पृथ्वीमा छैन । सबै ऋषिहरूको निवेदनलाई स्वीकारेर शुकदेव मुनिले सभाको अध्यक्षता गरे, उनले नयाँ पुराणको पनि रचना गरे ।

जय गुरुदेव !

# ऋषेश्वर महादेव

उपत्यकामा वर्षको कुनै दिन पनि यस्तो छैन जुन दिन जात्रा, पर्व वा पूजाआजा नपरेको होस् । कुनै न कुनै दिन कुनै न कुनै पूजाआजा गर्ने श्रद्धा, संस्कारमा रमाएका उपत्यकाबासीहरूले चतुर्थी, पञ्चमी, एकादशी, पूर्णिमा, अष्टमी, द्वादशी, चतुर्दशी र औंसी तिथिलाई तान्त्रिक विधिबाट पूजा गर्ने अवसरका रूपमा लिन्छन् । गाईजात्रा, प्रतिपदाजस्ता तिथिमा, सिठीनखः (नेवारी समुदायमा प्रचलित चाड), कुमार षष्ठीका दिनमा पूजाआजा गर्नुका साथै यम द्वितीयामा भाइपूजा गर्ने प्रचलन नेपाली समाजमा फल्दोफुल्दो रूपमा रहेको पाइन्छ ।

उपत्यकामा बस्ती विकासको क्रमदेखि नवनगर स्थापना हुँदासम्म व्रतादि, पूजाआजा बस्दा खासगरी मातृका देवी (मातृ शक्ति) हरूको प्रतीकात्मक अमूर्त खोक्रो ढुंगा प्रतिस्थापित भएको देखिन्छ । गुहेश्वरी पीठ, बगलामुखी, वज्रबाराही आदि प्रसिद्ध पीठहरूमा अमूर्त ढुंगामाथि नै आकृति मूर्ति राखिएका पाइन्छन् । यस्ता श्रद्धा, पूजाआजाहरूको कुनै न कुनै वैदिक, पौराणिक, ऐतिहासिक किंवदन्तीमा आधार रहेका पाइन्छन् ।

भाद्रशुक्ल पञ्चमी अर्थात् ऋषि पञ्चमी हिन्दु नारीहरूले व्रत, उपवास बसी पूजा-आराधना गरी मनाउँछन् । यस दिन स्त्रीहरू पूजा गर्न छरिएर रहेका उपत्यकाका शिव मन्दिरहरूमा पनि जान्छन् । देवस्थानहरूमध्ये टेकु दोभान नजिक रहेको ऋषेश्वर महादेवस्थानमा वर्षको एकपटक व्रतालुहरूको धेरै ठूलो घुइँचो लाग्छ । अजंगका रुखहरूको फेदमा जमीन सतहको समथरमा करीब डेढ फिट लम्बाइ आकारको प्रस्तर शिवलिङ्ग ऋषेश्वर महादेवस्वरूप रहेको छ । नेशनल ट्रेडिङ्ग लिमिटेडको दक्षिणपूर्व कुना पारी, साविक पुरानो भन्सार कार्यालयको गोदाम घरको उत्तरी साँधमा रहेको यस स्थानको पश्चिममा पनि गोदाम घरको साँध रहेको छ । यसो हेर्दा महादेवस्थान पायक नपरेको अप्ठ्यारो र साँघुरो ठाउँमा हाल यातायात संस्थानको कम्पाउण्डभित्र रहेको छ । राणा शासनको उत्तरकालमा भन्सार कार्यालयको गोदाम घर निर्माण गर्दा यस महादेवस्थानको यथोचित संरक्षण किन नगरिएको होला भन्ने प्रश्न पनि नउब्जिने

होइन। कर्मचारी संचय कोषले स्वामित्वमा लिएको यस जग्गामा आवासीय भवन निर्माण गर्ने योजना रहेको बुझिएको छ। हाल शिवलिङ्ग रहेको उपेक्षित स्थानमा त्यसबेला यथोचित मन्दिर बन्ने आशा भने गर्न सकिन्छ।

कामनपा, वडा नं. १२ वल्खु टेकुद्वारा प्रकाशित 'काठमाडौं महानगरपालिका १२ वडा–एक परिचय' नामक पुस्तिकामा पनि ऋषेश्वर महादेवस्थानको सम्बन्धमा लेखिएको पाइन्छ। किंवदन्तीअनुसार परापूर्वकालमा सप्तर्षि (अत्रि, भरद्वाज, विश्वामित्र, जमदग्नि, वशिष्ठ, गौतम र प्रतिव्रता (अरुन्धती) ले भाद्र शुक्ल पञ्चमीका दिन वृक्षमुनि बसी पूजा, जप, तप गरिरहेको बेला शिवलिंगबाट साक्षात् भगवान् शिव उत्पन्न भई सप्तर्षिलाई दर्शन दिनुभएको थियो। सप्तर्षिहरूले उक्त ज्योतिर्मय शिवलिंगलाई ऋषेश्वर

महादेव नामाकरण गरेका थिए। ऋषि पञ्चमीका दिन नारीहरूले व्रत बसेर ऋषेश्वर महादेवको दर्शन गरी पूजाआजा गरेमा रजस्वला दोष निवारण हुने, आफ्ना पति दीर्घायु हुने, साथै वर्षभरि जान-अन्जानमा भएका दोषहरूबाट पनि मुक्ति मिल्दछ भन्ने पौराणिक कथन छ। यस शिवलिंगको नित्य पूजा हुँदै आएको र ऋषि पञ्चमीका दिन ठूलो मेला लाग्ने कुरा उक्त पुस्तिकामा उल्लेख छ।

जय गुरुदेव !

**गोरक्ष निखिल वाणी** मासिक
प्रेस काउन्सिलको वर्गीकरणमा
'क' श्रेणीमा पर्न सफल भएकोमा
**हार्दिक बधाई** !
तथा यस पत्रिकाको १० औं वर्ष
प्रवेशको उपलक्ष्यमा
उत्तरोत्तर प्रगतिको कामना गर्दछौं ।

**प्रिन्ट प्रोसेस**
**डिजिटल स्क्यानिङ सर्भिस**
**त्रिपुरेश्वर, काठमाडौं**

**गोरक्ष निखिल वाणी** मासिक
प्रेस काउन्सिलको वर्गीकरणमा
'क' श्रेणीमा पर्न सफल भएकोमा
**हार्दिक बधाई** !
तथा यस पत्रिकाको १० औं वर्ष
प्रवेशको उपलक्ष्यमा
उत्तरोत्तर प्रगतिको कामना गर्दछौं ।

**भेराइटी प्रिन्टिङ्ग प्रेस परिवार**
**कुलेश्वर, काठमाडौं ।**

## भक्तपुर आश्रम सरेको सूचना

**सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय भक्तपुर २०६५/४/१६ गते बिहीबारका दिनदेखि कटुन्जे गाविस वडा नं. १ स्थित सुशील भैरवस्थान जाने बाटोको जिल्ला सडक विभाग कार्यालयसँगै OSKA-I भवनमा स्थानान्तरण भएकोले आगामी दिनमा आश्रमका सम्पूर्ण गतिविधिहरू यही आश्रम भवनबाट सञ्चालन हुने कुरा जानकारी गराइन्छ ।**

**सिद्धाश्रम शक्ति केन्द्र**
**भक्तपुर सम्पर्क कार्यालय, कटुन्जे-१, भक्तपुर**

## आश्रममा उपलब्ध सेवाहरू

- योग, ध्यान, हिप्नोटिज्म, आदि बारे अध्ययन, अनुसन्धान एवं परामर्श सेवा ।
- मन्त्र शक्तिद्वारा हाम्रो दैनिक जीवनमा आइपर्ने विविध समस्याहरूको समाधान ।
- फोटो थेरापीको माध्यमबाट असाध्य रोगहरूको उपचार ।
- मन्त्र तन्त्रको माध्यमबाट साधनामा अघि बढ्न चाहने साधक साधिकाहरूलाई विशेष मार्गनिर्देशन ।
- पूर्ण प्रामाणिकरूपमा विशेष प्रक्रियाद्वारा प्राण-प्रतिष्ठित यन्त्र, माला, आसनलगायत साधनाका लागि आवश्यक सम्पूर्ण सामग्रीहरूको व्यवस्था ।
- परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको बारेमा अध्ययन अनुसन्धान एवं जानकारी चाहनेहरूका लागि गोरक्ष निखिल पुस्तकालयको व्यवस्था ।
- विभिन्न किसिमका रोगहरूको उपचारका लागि विशेष तान्त्रिक हिलिङ्को व्यवस्था ।

कविता

# वाचा

आऊ आज सँगै बसौँ
सँगै माया गाँसौँ,
टुक्रा-टुक्री यो मनलाई
यतै कतै जोडौँ ।

ठूला-ठूला यात्रा किन
सानै शुरु गरौँ,
ठूलो मान्छे मात्रै किन
असल पनि बनौँ ।

धेरै भयो मान्दै आ'को
अब जान्न खोजौँ,
बाहिरी यात्रा धेरै भयो
अब भित्री सिकौँ ।

छिन्न-भिन्न यो मनलाई
सद्गुरुमा जोडौँ,
जीवन-जीवन नरित्तिने
न्यानो माया खोजौँ ।

सहस्रारमा गोरख-निखिल
धारण सधैँ गरौँ,
हृदयमा ममताको
आँचल सधैँ ओढौँ ।

आऊ मित्र आऊ आज
गुरु दिवस मानौँ,
गुरु चरण, गुरु शरण
आजैदेखि परौँ ।

ठूलो को हो, सानो को हो ?
सबै सगैँ रमौँ,
गुरुसँग नछुट्टिने
आजै वाचा गरौँ ।

–कौशलकुमार पौडेल

## गुनासो छ भने लेख्नुहोस्

- के तपाईंको पत्रिकासँग सम्बन्धित कुनै गुनासो छ ?
- के तपाईंलाई पत्रिका नियमित प्राप्त भइरहेको छैन ?
- के तपाईंको सदस्यता अवधिमा त्रुटि देखिन्छ ?
- के तपाईंलाई पत्रिका सदस्य विस्तार गरेबापतको उपहार प्राप्त भएको छैन ?
- के तपाईं पत्रिका आइपुग्ने आफ्नो ठेगाना परिवर्तन गर्न चाहनुहुन्छ ?
- के तपाईंका यसका अतिरिक्त अरू पनि गुनासा तथा समस्याहरू छन् ?

आफ्नो गुनासोलाई पत्र, इमेल, फोनबाट वा भेटेर पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभागमा तुरुन्त जानकारी गराउनुहोस् । सम्भव भएसम्म समस्याको समाधान तुरुन्त हुनेछ ।

साथै, गोरक्ष निखिल वाणीका पुराना अङ्कहरू चाहिएमा सम्पर्क राख्नुहोला ।

**पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग**, फोन : ०१६२२५१७७

## भाद्र महिनाका चाडपर्व

| | |
|---|---|
| भाद्र १ गते | गाईजात्रा |
| भाद्र २ गते | **श्री शिव गोरक्ष हवन** |
| भाद्र ३ गते | **तान्त्रोक्त वटुक भैरव हवन** |
| भाद्र ४ गते | **तान्त्रोक्त महालक्ष्मी हवन** |
| भाद्र ५ गते | **दिव्य गुरु महोत्सव, तान्त्रोक्त वगलामुखी हवन** |
| भाद्र ७ गते | श्रीकृष्णजन्माष्टमीव्रत |
| भाद्र ८ गते | गोरखकाली पूजा, गौरा पर्व |
| भाद्र ११ गते | अजा एकादशीव्रत |
| भाद्र १२ गते | प्रदोष व्रत |
| भाद्र १४ गते | कुशे औंसी, बुबाको मुख हेर्ने दिन |
| भाद्र १६ गते | दरखाने दिन |
| भाद्र १७ गते | हरितालिका (तीज) व्रत |
| भाद्र १९ गते | ऋषिपञ्चमीव्रत (सप्तऋषिपूजा) |
| भाद्र २२ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| भाद्र २६ गते | हरिपरिवर्तनी एकादशी |
| भाद्र २७ गते | प्रदोषव्रत |
| भाद्र २९ गते | इन्द्रजात्रा, अनन्तचतुर्दशीव्रत |
| भाद्र ३० गते | सोह्रश्राद्ध आरम्भ |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे–गुरु पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे–आरती**

*जब सारा संसार विनाशको संघारमा उभिनेछ तब सम्पूर्ण विश्वको दृष्टि आर्यावर्ततिर पर्नेछ र आर्यावर्तको दृष्टि मेरा शिष्यहरूउपर पर्नेछ।*

*– गुरुवाणी*

# सप्तर्षि मण्डल

## मरीचि

मरीचि परमपिता ब्रह्माका मानस पुत्र हुन् । यिनको तुलना साक्षात् ब्रह्मदेवसँग गरिन्छ किनकि यिनी ब्रह्माजस्तै सर्वदा सृष्टि कार्यमा लागिरहन्छन् । शास्त्रमा यिनका कैयौँ पत्नीहरूको प्रसंग आउँछ जसमा दक्ष प्रजापतिकी पुत्री संभूति र धर्म नामक ब्राह्मणकी कन्या धर्मव्रता प्रमुख छन् । यी दुवै कन्याले सुयोग्य वरको कामनाले कठीन तपस्या गरे र अन्ततः महर्षि मरीचिले यिनीहरूलाई पत्नीरूपमा स्वीकार गरे । कश्यप र मनुजस्ता यिनका अनेक सन्तान भए र यिनैको वंश परम्पराबाट पछि गएर सम्पूर्ण संसार परिपूर्ण र सुरक्षित भयो । यिनको वंश आजसम्म जगत्मा विद्यमान छ । यहाँसम्म कि सनातन धर्ममा यदि कसैलाई आफ्नो गोत्रको ज्ञात छैन भने उसले आफ्नो गोत्रलाई कश्यप मान्न सक्छ । महर्षि मरीचि कहिलेकाहीँ इन्द्रसभामा उपस्थित भएर दण्डनीतिको मंत्रित्व पनि गर्दछन् तथा यिनले भृगुलाई पनि दण्डनीति सिकाएका थिए ।

## अत्रि

महर्षि अत्रि ब्रह्माका दोस्रा मानस पुत्र हुन् । कर्दम प्रजापतिकी कन्या तथा कपिलकी बहिनी अनसुइया यिनकी पत्नी हुन् । महर्षि अत्रि र अनसुइयालाई प्रजापिता ब्रह्माले सृष्टि रचनाको आदेश दिनुहुँदा उनले कठीन तपस्या गरे । यिनको तपस्याबाट प्रसन्न भएर त्रिदेव (ब्रह्मा, विष्णु, महेश) प्रकट हुनुभयो । पतिपत्नी दुवै यतिविघ्न तल्लीन थिए कि उनीहरूलाई त्रिदेवहरूको आगमनको याद रहेन । पछि त्रिदेवले नै उनीहरूलाई जगाएर वरदान माग्नका लागि भन्नुभयो । तब उनीहरूले त्रिदेवलाई नै पुत्ररूपमा मागे । कालान्तरमा त्रिदेवको वरदानको फलस्वरूप अनसुइयाको गर्भबाट ब्रह्मा, विष्णु र महेशको अंशबाट सम्पुट दत्तात्रेय भगवान्को जन्म भयो । यिनको पतिव्रत र सतीत्वको परिणामस्वरूप नै वनवासको समयमा भगवान् राम सीता र लक्ष्मणका साथ यिनको आश्रममा जानु मात्र भएन, त्यसबेला यिनलाई जगत्जननी भगवती सीतालाई उपदेश दिने गौरव पनि प्राप्त भयो । शास्त्रमा उल्लेख छ कि एकपटक राहुले भगवान् सूर्यमाथि आक्रमण गर्दा सूर्यदेव आफ्नो स्थानबाट च्यूत भएर गिर्नुभयो । तब महर्षि अत्रिको तपोबलबाट नै उहाँको रक्षा भयो ।

## अंगिरा

महर्षि अंगिरा पनि ब्रह्माका एक मानस पुत्र र प्रजापति हुन् । यिनको तपस्या र उपासना यति तीव्र थियो कि यिनको तेज र प्रभाव अग्निको भन्दा अधिक बढ्न गयो । त्यसबेला अग्निदेव पनि जलमा बसेर तपस्या गर्नुहुन्थ्यो । जब उहाँले अंगिराको तपोबलका सामु आफ्नो तपस्या र प्रतिष्ठा तुच्छ भइरहेको देख्नुभयो तब बडो सन्ताप र ग्लानिका साथ उहाँ महर्षि अंगिरा कहाँ आउनुभयो । महर्षि अंगिराले उहाँको विषादलाई महसुस गरेर भने– 'तपाईंको सन्तप्तताको कुनै कारण छैन, तपाईं अत्यन्तै प्रसन्त भएर मानिसहरूको कल्याण गर्नुहोस् ।' अग्निले गिडगिडाएर भन्नुभयो– 'मेरो कीर्ति नष्ट भइरहेको छ, अब मलाई कसैले पनि अग्नि भनेर सम्मान नदिने भयो । तपाईं प्रथम अग्नि हुनुहुन्छ र म द्वितीय अग्नि ।' महर्षि अंगिराले भने– 'तपाईंले अग्निको रूपमा देवताहरूलाई भोजन पुऱ्याउनुहोस् र

स्वर्ग चाहनेहरूलाई मार्ग बताउनुहोस् तथा आफ्नो दिव्य ज्योतिद्वारा मुमुक्षुहरूको अन्तःकरण शुद्ध गर्नुहोस्, म तपाईंलाई पुत्रको रूपमा वरण गर्दछु ।' अग्निदेवले बडो प्रसन्नताका साथ उनको कुरालाई मान्नुभयो र बृहस्पतिको रूपमा उनको छोरा भई प्रसिद्ध हुनुभयो ।

**पुलस्त्य**

महर्षि पुलस्त्य पनि पूर्वोक्त ऋषिहरूजस्तै ब्रह्माका मानस पुत्र हुन् । यिनी पनि आफ्नो तपस्या, ज्ञान र दैवी सम्पत्तिद्वारा जगत्‌को कल्याण सम्पादनमा लागिरहन्छन् । यिनको स्वभाव यति दयालु छ कि एकपटक जब आफ्नो दुष्टताको कारण रावणले कार्तवीर्य सहस्रार्जुनकहाँ बन्दी हुनुपर्‍यो तब यिनले दयावश रावणलाई मुक्त गर्न उनीसँग अनुरोध गरे । जसको सामु ठूलठूला देवता र वीर पुरुषहरू पनि नतमस्तक हुन जान्थे त्यस्ता व्यक्तित्व सहस्रार्जुनले पनि यिनको आज्ञालाई उल्लंघन गर्न सकेनन् । यिनको तपोबलको सामु उनको शिर झुक्यो । पुलस्त्यका सन्ध्या, प्रतीची र प्रीति आदि कैयौँ स्त्रीहरू थिए र दत्तालि आदि कयौँ पुत्र थिए । यिनै दत्तालि स्वायम्भव मन्वन्तरमा अगस्त्य नामबाट प्रसिद्ध भए । यिनैका एउटी पत्नी हविर्भुबाट विश्रवा भएका थिए जसका पुत्र कुबेर, रावण आदि भए । यी योगविद्याका आचार्य मानिन्छन् । ऋषि पुलस्त्यले नै देवर्षि नारदलाई वामनपुराणको कथा सुनाएका थिए । पराशर क्रुद्ध भएर राक्षसहरूको नाशका लागि महान् यज्ञ गरिरहँदा वशिष्ठको परामर्शबाट पुलस्त्यको अनुरोध मानेर उनले यज्ञ बन्द गरे जसबाट महर्षि पुलस्त्य उनीसँग अत्यन्त प्रसन्न भए र उनलाई आफ्नो कृपा तथा आशीर्वादबाट समस्त शास्त्रहरूमा पारदर्शी बनाए ।

**पुलह**

महर्षि पुलह पनि ब्रह्माका मानस पुत्र र षोडश प्रजापतिहरूमध्ये एक हुन् । यिनी पनि अन्यान्य ऋषिहरूजस्तै जगत्‌को हित साधनमा लागिरहन्छन् । यिनले

आफ्ना पिता ब्रह्माको आज्ञाबाट दक्ष प्रजापति र महर्षि कर्दमकी कन्याहरूलाई पत्नीरूपमा ग्रहण गरेर सृष्टिको वृद्धि गरे । अनेकौं योनि र जातिका सन्तान यिनबाट भए । यिनले महर्षि सनन्दनको शरण ग्रहण गरेर सम्प्रदायको रक्षा गर्दै तत्त्वज्ञानलाई सम्पादन गरे र फेरि आफ्ना शरणागत जिज्ञासु गौतमका लागि यसको विस्तार गरे । जगत्को आध्यात्मिक, आधिदैविक र अधिभौतिक शान्तिका लागि यिनी निरन्तर तपस्यामा संलग्न रहन्छन् । पुराणहरूमा यिनको चर्चा पनि ठाउँ-ठाउँमा रहेको पाइन्छ ।

### ऋतु

महर्षि ऋतु पनि ब्रह्माका मानस पुत्र र षोडश प्रजापतिहरूमध्ये एक हुन् । यिनले आफ्ना पिता ब्रह्माको आज्ञाबाट कर्दम प्रजापतिकी पत्नी देवहूतिको गर्भबाट उत्पन्न क्रिया र दक्ष प्रजापतिकी सन्नति नामका कन्यालाई पत्नीरूपमा स्वीकार गरे । उनीद्वारा साठी हजार बालखिल्य नामका पुत्र भए । यी बालखिल्य नै भगवान् सूर्यको रथको अघि-अघि उहाँतिर फर्केर स्तुति गर्दै हिँडिरहन्छन् । यिनै ब्रह्मर्षिहरूका महामहिम तपास्याशक्ति नै सूर्यले धारण गर्नुहुन्छ र यिनीहरू निरन्तर उहाँको उपासनामा संलग्न रहन्छन् ।

महर्षि ऋतु नै वाराहकल्पमा वेदका विभाजक, पुराणहरूका प्रदर्शक र ज्ञानोपदेष्टा व्यास भएका थिए । कहींकहीं ब्रह्माको बायाँ आँखाबाट यिनको उत्पत्ति भएको मानिन्छ । पुराणहरूमा ठाउँ ठाउँमा यिनको प्रसंग पाइन्छ र आज पनि यिनी ध्रुवको प्रदक्षिणा गर्दै जगत्को कल्याणमा लागिरहन्छन् ।

### वशिष्ठ

महर्षि वशिष्ठको उत्पत्तिको वर्णन पुराणहरूमा विभिन्न रूपबाट गरिएको पाइन्छ । यिनी कतै ब्रह्माका मानस पुत्र, कतै आग्नेय पुत्र र कतै मित्रावरुणका पुत्र कहलिएका छन् । कल्प भेदबाट हेर्ने हो भने यी सबै कुरा ठीकै हुन् । ब्रह्मशक्तिका मूर्तिमान् स्वरूप तपोनिधि महर्षि वशिष्ठको चरित्रबाट हाम्रा धर्मशास्त्र, इतिहास र पुराण भरिएका छन् । अरुन्धती यिनकी सहधर्मिणी हुन् जो सप्तर्षि मण्डलमा नै आफ्ना पतिको सेवामा लागिरहन्छिन् । जब यिनका पिता ब्रह्माले यिनीलाई सृष्टि गर्न र भूमण्डलमा आएर सूर्यवंशी राजाहरूको पौरोहित्य गर्ने आज्ञा दिनुभयो तब यिनले यस कार्यमा बडो आनाकानी गरे । ब्रह्माले उनलाई सम्झाउनु भयो कि यसै वंशमा पछि गएर पुरुषोत्तम भगवान् श्रीरामको पूर्ण अवतार हुनेछ, अतः यस निन्दित कर्मद्वारा पनि वशिष्ठलाई उच्च गति प्राप्त हुनेछ । तब यिनले ब्रह्माको कुरालाई स्वीकारे । यहाँ आएर उनले आफूलाई सर्वदा सर्वभूति हितमा लगाए । जब जब अनावृष्टि भयो, दुर्भिक्ष पर्‍यो तब तब यिनले आफ्नो तपोबलबाट वर्षा गराए र अकाल मृत्युबाट जीवको रक्षा गरे । यिनले इक्ष्वाकु, निमि आदिद्वारा अनेकौं यज्ञ गराए र विभिन्न महापुरुषले यज्ञहरूमा सम्मिलित भएर उनको अनुष्ठानलाई पूर्ण गरे । आफ्ना पूर्वजहरूको असफलताले गर्दा जब गंगालाई ल्याउन भगीरथलाई निराश हुनुपर्‍यो तब यिनले उनलाई प्रोत्साहन दिएर मन्त्र बताए र यिनैको उपदेशको बलमा भगीरथले भगीरथ प्रयत्न गरेर गंगाजस्ती लोककल्याणकारिणी महानदीलाई हाम्रा लागि सुलभ गर्न सके । जब दिलीप सन्तानहीन हुनाले अत्यन्तै दुःखी भइरहेका थिए तब उनलाई आफ्नो गौ नन्दिनी सेवाविधि बताएर रघुजस्तो पुत्ररत्नको दान गरे । दशरथको निराशामा आशाको संचार गर्ने महर्षि वशिष्ठ थिए । यिनैको सम्मतिबाट पुत्रेष्टि यज्ञ भयो र फलस्वरूप रामले अवतार ग्रहण गर्नुभयो । भगवान् श्रीरामलाई शिष्यरूपमा पाएर वशिष्ठले आफ्नो पुरोहित जीवन सफल बनाए र वेद-वेदाङ्ग मात्र नभई योगवाशिष्ठजस्तो अपूर्व ज्ञानमय ग्रन्थको उपदेश दिएर आफ्नो ज्ञानलाई सफल बनाए । भगवान् श्रीराम वनगमनबाट फर्किनु भएपछि उहाँलाई राज्यकार्यमा सर्वदा परामर्श दिइरहे र उहाँबाट अनेकौं यज्ञादि गराए ।

जय गुरुदेव !

# श्रीकृष्ण पूजन

श्रीकृष्ण जन्माष्टमीको आफ्नै विशिष्ट महत्त्व रहँदै आएको छ । यस पर्वमा विशेष विधि-विधानपूर्वक भगवान् श्रीकृष्णको पूजन गर्न पाउनु जीवनकै सौभाग्य मानिन्छ । तसर्थ, सम्पूर्ण पाठकवर्गको लाभार्थ यस श्रीकृष्ण पूजन विधान यहाँ प्रकाशित गरिएको छ । श्रीकृष्ण जन्माष्टमीको पावन दिनमा अथवा कुनै पनि अष्टमी तिथिमा भगवान् कृष्णको विशिष्ट पूजाको लागि आवश्यक सामग्री एकत्रित गरी बिहान वा राति जुन बेला तपाईं पूजा गर्न चाहनुहुन्छ, त्यसबेला स्नान गरेर पूजा कक्षमा पहेँलो या सेतो आसन ओछ्याएर उत्तर या पूर्व दिशातिर मुख फर्काएर बसौं । पूजनस्थलमा सेतो वस्त्र बिछ्याई त्यसमा भगवान् कृष्णको प्राण-प्रतिष्ठित फोटो अथवा उहाँको प्रतिमा र श्रीकृष्ण यंत्र स्थापित गरौं र धूपदीप बालौं । यसपछि हात जोडेर भगवान् गणपतिको स्मरण गरौं ।

**प्रार्थना–**

**सुमुखश्चैकदन्तश्च कपिलो गजकर्णकः ।**
**लम्बोदरश्च विकटो विघ्ननाशो विनायकः ॥**
**धूम्रकेतुर्गणाध्यक्षो भालचन्द्रो गजाननः ।**
**द्वादशैतानि नामानि यः पठेच्छृणुयादपि ॥**
**विद्यारम्भे विवाहे च प्रवेशे निर्गमे तथा ।**
**संग्रामे संकटे चैव विघ्नस्तस्य न जायते ॥**

**संकल्प–**

दाहिने हातमा जल, अक्षता, पुष्प तथा कुंकुम लिऊँ–

ॐ **विष्णुर्विष्णुर्विष्णुः श्रीमद्‌भवतो महापुरुषस्य विष्णोराज्ञया प्रवर्तमानस्य अद्य श्री ब्रह्मणो द्वितीय परार्द्धे श्वेतवाराह कल्पे वैवस्वतमन्वन्तरे अष्टाविंशतितमे कलियुगे कलिप्रथमचरणे जम्बूद्वीपे भारतवर्षे अमुक मासे** (महिनाको नाम) **अमुक वासरे** (बारको नाम) **अमुक पुण्य तिथौ** (तिथिको नाम) **अमुक गोत्रीयः** (आफ्नो गोत्रको नाम) **अमुक शर्माऽहं** (आफ्नो नाम भनौं) **अद्य भगवतो कृष्णास्य प्रीत्यर्थं यथा मिलितोपचारैः पूजनं करिष्ये ।**

जललाई जमीनमा छोडौं ।

**कलश पूजन–**

कलशमा जल भरेर आफ्नो दायाँतर्फ स्थापित गरौं र त्यसमा वरुण देवतालाई आह्वान गरौं–

**सर्वे समुद्राः सरितस्तीर्थानि जलदा नदाः ।**
**आयान्तु देव पूजार्थ दुरितक्षयकारकाः ।**

यसपछि 'वं वरुणाय नमः' मंत्र उच्चारण गर्दै गन्ध, अक्षता र पुष्पलाई कलशमा राखेर तीर्थलाई आव्हान गरौं–

**गंगे च यमुने चैव गोदावरि सरस्वति ।**
**नर्मदे सिन्धु कावेरि जलेऽस्मिन् सन्निधिं कुरु ॥**
**प्रसन्नो भव । वरदो भव । अनया पूजया वरुणाद्यावाहिता देवता प्रीयन्तां न ममः ॥**

**पवित्रीकरण–**

ॐ **अवपवित्रः पवित्रो वा सर्वास्थां गतोऽपि वा ।**
**यः स्मरेत् पुण्डरीकाक्षं सः बाह्याभ्यन्तरः शुचिः ॥**

**गुरु पूजन**

दुवै हात जोडेर गुरुदेवको ध्यान गरौं–

**गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः ।**
**गुरुः साक्षात् पर ब्रह्म तस्मै श्री गुरवे नमः ॥**

यसपश्चात् गन्ध, अक्षता, पुष्प र धूप-दीपबाट पंचोपचार पूजन गरौं । फेरि नजिकै रहेको भगवान् कृष्णको सुन्दर फोटो अथवा चित्र (प्रतिमा, विग्रह) मा षोडशोपचार पूजन गरौं –

**ध्यान**

**वंशी विभूषित करान्नव नील दाभात्,**
**पीताम्बरादरुण बिम्ब फलाधरोष्ठात् ।**
**पूर्णेन्दु सुन्दर मुखादर बिम्ब नेत्रात्,**
**कृष्णात् परं किमपि तत्त्वमहं न जाने ॥**
**श्रीकृष्णाय नमः ध्यानं समर्पयामि ।**

**आसन**

पुष्प लिएर कुनै थालीमा आसनको रूपमा स्थापित गरौं र त्यसमा श्रीकृष्ण विग्रह स्थापित गरेर निम्न मंत्रको उच्चारण गरौं–

**रम्यं सुशोभनं दिव्यं सर्व समन्वितं,**
**आसनं च मया दत्तं गृहाण परमेश्वर ।**
**श्रीकृष्णाय नमः आसनं समर्पयामि ।**

**पाद्य**

श्रीकृष्ण विग्रहमा जल चढाऔं–

**गंगोदकं निर्मलं च सर्व सौगन्ध्य संयुतम्,**
**पाद प्रक्षालनार्थाय दत्तं ते प्रतिगृह्यताम् ।**
**श्रीकृष्णाय नमः पाद्यं समर्पयामि ।**

**अर्घ्य**

अर्घ्यको जल आचमनीले श्री कृष्ण विग्रहमा चढाऔं–

**अर्घ्य गृहाण देवेश गन्ध पुष्पाक्षतैः सह,**
**करुणाकर मे देव गृहाणाऽर्घ्य नमोऽस्तुते ।**
**श्रीकृष्णाय नमः अर्घ्यं समर्पयामि ।**

**आचमनीयम्**

आचमनीबाट तीनपटक जल विग्रहमा चढाउँदै निम्न मंत्रको उच्चारण गरौं–

**सर्व तीर्थ समानीतं सुगन्धिं निर्मलं जलं,**
**आचम्यता मया दत्तं गृहीत्वा परमेश्वरं ।**
**श्रीकृष्णाय नमः आचमनीयं समर्पयामि ।**

**मधुपर्क**

काँश, चाँदी अथवा तामाको पात्रमा मह, घ्यू, दही मिलाएर विग्रहमा चढाऔं–

**इदं मधुपर्क श्रीकृष्णाय निवेदयामि नमः ।**

**स्नान**

आचमनीबाट जल चढाउँदै निम्न मंत्रको उच्चारण गरौं–

**वृन्दापन विहारेण श्रान्ते विश्रान्ति कारकं ।**
**चन्द्रपुष्कर पानीयं गृहाण पुरुषोत्तम ॥**
**श्रीकृष्णाय नमः स्नानं समर्पयामि ।**

**दुग्धस्नान**

**ॐ पयः पृथिव्यम्पयोऽषधीषु पयोदिव्यन्तरिक्षे**
**पयोधाः पयस्वतीः प्रदिश सन्तुमह्यम् ।**
**श्रीकृष्णाय नमः दुग्ध स्नानं समर्पयामि ।**

**दधिस्नान**

**ॐ दधिक्राव्णो अकारिषं जिष्णोरश्वस्य वाजिनः ।**
**सुरभि नो मुखाकरत् प्रण आयू (गूं) षितारिषत्**
**श्रीकृष्णाय नमः दधि स्नानं समर्पयामि ।**

**घृत स्नान**

**ॐ घृतं मिमिक्षे घृतमस्य योनिर्घृते श्रितो घृतमस्य धाम ।**
**अनुष्यधमावह मादयस्व स्वाहा कृतं वृषभवक्षि हव्यम् ॥**
**श्रीकृष्णाय नमः घृतं स्नानं समर्पयामि ।**

**मधुस्नान**

मह चढाउने–

**ॐ मधुव्वाता ऋतायते मधुक्षरन्ति सिन्धवः माध्वीर्नः सन्त्वोषधीः । मधुनक्तमुतोष सो मधुमत्पार्थिव (गूं) रजः । मधु-द्योरस्तुनः पिता मधुमान्नो वनस्पतिः मधुमानस्तु सूर्यः माध्वी र्गावो भवन्तु नः ।**
**श्रीकृष्णाय नमः मधु स्नानं समर्पयामि ।**

**शर्करा स्नान**

**ॐ अपा (गूं) रसमुद्वयस् (गूं) सूर्यसन्त (गूं) समाहितम् । अपा (गूं) रसस्य यो रसस्तं वो गृह्वाम्युत्तममुपयामगृहीतोसीन्द्राय त्वा जुष्टं गृह्वाम्येषते योनिरिन्द्राय त्वा जुष्टतमम् ।**
**श्रीकृष्णाय नमः शर्करा स्नानं समयर्पयामि ।**

**पंचामृत स्नान**

**ॐ पंच नधः सरस्वतीमपियन्ति सस्त्रोतसः ।**
**सरस्वती तु पंचधा सो देशेऽभवत्सरित् ।**
**श्रीकृष्णाय नमः पंचामृत स्नानं समर्पयामि ।**

यसपश्चात् भगवान् कृष्णको विग्रह तस्वीर वा यंत्रलाई शुद्ध जलबाट स्नान गराएर पुछौं ।

**वस्त्र**

निम्न मन्त्रको उच्चारण गर्दै उत्तम स्तरको पहेँलो वस्त्र भगवान्लाई पहिऱ्याऔं–

**इदं परिधेय वस्त्रं उत्तरीयं वस्त्रं च श्रीकृष्णाय निवेदयामि नमः ।**

**आभूषण**

हार, मुकुट-मणि आदि गहना भगवान्लाई पहिऱ्याउँदै यस मंत्रलाई उच्चारण गरौं–

**इमानि भूषणानि श्रीकृष्णाय निवेदयामि नमः ।**

**गन्ध**

केशर, कपूरमिश्रित चन्दन लिएर भगवान् कृष्णको निधारमा लगाऔं–

**इमं गन्धं श्रीकृष्णाय निवेदयामि नमः ।**

**अक्षता**

**अक्षताश्च सुरश्रेष्ठ कुंकुमाक्तः सुशोभिताः**
**मया निवेदिता भक्तत्या गृहाण परमेश्वर ।**
**श्रीकृष्णाय नमः अक्षतान् समर्पयामि ।**

**पुष्पहार**

नाना प्रकारका सुगन्धित पुष्प तथा पुष्प माला विग्रहमा चढाऔं र निम्न मंत्रको उच्चारण गरौं–

**इमानि पुष्पाति श्रीकृष्णाय निवेदयामि नमः ।**

**तुलसी दल**

तुलसी दलमा चन्दन लगाएर निम्न मंत्रको उच्चारण गर्दै चढाऔं–

**इदं सचन्दनं तुलसीदलं श्रीकृष्णाय निवेदयामि नमः ।**

**धूप**

निम्न मंत्र पढ्दै धूप अर्पण गरौं–

**इमं धूपं श्रीकृष्णाय निवेदयामि नमः ।**

**दीप**

श्रीकृष्णलाई दीप देखाऔं–

**इमं दीपं श्रीकृष्णाय निवेदयामि नमः ।**

**नैवेद्य**

स्वच्छ थालमा भोज्य पदार्थ सजाएर भगवान्को सामु राखौं, साथमा पानी पनि राखौं र निम्न मंत्र उच्चारण गरौं–

**ॐ क्लीं कृष्णाय गोविन्दाय गोपीजना वल्लभाय स्वाहा ।**

यसपश्चात् निम्न मंत्रको उच्चारण गरौं–

**इदं नैवेद्यं श्रीकृष्णाय निवेदयामि नमः ।**

यसपश्चात् यस मंत्रबाट पाँचपटक आचमन गरौं–

**ॐ प्राणाय स्वाहा । ॐ अपानाय स्वाहा ।**
**ॐ व्यानाय स्वाहा । ॐ उदानाय स्वाहा ।**
**ॐ समानाय स्वाहा ।**

**फल**

अनेक प्रकारका ताजा फल थालमा सजाएर भगवानलाई अर्पित गरौं–

**इदं फलं मया देव स्थापितं पुरतस्तव,**
**तेन मे सफला वाप्तिः भवज्जन्मनि जन्मनि ।**

**ताम्बूल**

भगवान्लाई पान, सुपारी आदि अर्पित गरौं–

**एतत् ताम्बूलं श्रीकृष्णाय निवेदयामि नमः ।**

**पुष्पांजलि**

दुवै हातमा पुष्प लिएर भगवान् कृष्णलाई अर्पित गरौं–

**नाना सुगन्ध पुष्पाणि यथा कालोद्भवानि च,**
**पुष्पांजलि र्मया दत्ता गृहाण परमेश्वर ।**
**श्रीकृष्णाय पुष्पांजलि समर्पयामि नमः ।**

**नमस्कार**

दुवै हात जोडौं–

**कृष्णाय वासुदेवाय हरये परमात्मने ।**
**प्रणतक्लेशनाशाय गोविन्दाय नमो नमः ।**
**श्रीकृष्णाय नमः नमस्कारोमि ।**

यसपश्चात् निम्न मंत्रको तीन माला कुनै पनि मालाबाट मंत्रजप गरौं–

**॥ ॐ नमो भगवते वासुदेवाय ॥**

**विशेषार्घ्य**

निम्न मंत्रका साथ अर्घ्य दिने–

**अनया पूजया श्रीकृष्णः परमात्माप्रीयन्ताम् ।**
**ॐ तत्सद् ब्रह्माणर्पणमस्तु ।**

यसपछि भगवान् श्रीकृष्णको आरती सम्पन्न गरौं । यसपश्चात् आफ्ना समस्त स्वजनहरूसँग प्रसाद ग्रहण गरौं ।

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथका लीलाहरूको वर्णन गरी तयार पारिएको श्री गोरख महापुराणलाई शृङ्खलाबद्धरूपमा प्रकाशित गर्दै लगिएको छ। यसबाट परमपूज्य सद्गुरुदेवको बारेमा जान्न, बुझ्न खोज्ने सम्पूर्ण पाठकहरू लाभान्वित हुनुहुनेछ भन्नेमा हामी विश्वस्त छौँ। यस महापुराणलाई संकलन एवं अनुवाद गरी प्रस्तुत गरिएको हो। यससम्बन्धी सम्पूर्ण कुराहरूको जिम्मेवारी संकलक एवं अनुवादक (विष्णु खनाल, गोर्खा) स्वयंको नै हुनेछ।

# श्री गोरख महापुराण

## (उनान्चासौँ भाग)

गुरु गोरखनाथ महाराज भन्नुहुन्छ– बाबु, आपसी फूट र असमझदारीको कारण नै देशमा काटामार फैलिएको छ। यसकारण अब हामी हिमालय पर्वततर्फ गएर तपस्या गर्नेछौँ। अब म तिमीलाई एउटा अनौठो कुरा सुनाउँछु कि नाथपंथका आदिनाथ शिव महाराजपछि भगवान् दत्तात्रेय महाराज हुनुभयो र उहाँले चौबीस गुरुहरूसँग जुन-जुन शिक्षा ग्रहण गर्नुभयो, त्यो म तिमीलाई सुनाउँछु।

गुरु गोरखनाथ भन्नुहुन्छ– बाबु पद्मनाथ, मेरो गुरुदेवका प्रथम गुरु नाथपंथका भाग्यविधाता, ब्रह्मवेत्ता, अवधूत र महाज्ञानी श्री दत्तात्रेय महाराज नै हुनुहुन्छ जसका कतिपय शिष्य आज पनि ब्रह्मवेत्ताको पदमा शोभायमान छन्, ब्रह्मचर्य व्रतको पालन गर्नाको कारण नै अजर-अमर छन्। भगवान् शंकरजस्तै नै जगत्ले दत्तात्रेय महाराजलाई पनि भगवान् मानेर पूजा गर्दछन्। उहाँबाट पाएको वरदान पनि कहिल्यै निष्फल

हुँदैन । दत्तात्रेय भगवान् शंकरका पनि परम मित्र हुनुहुन्छ । शिवले धेरैजसो योगी, तपस्वीहरूलाई वरदान दत्तात्रेयकै माध्यमबाट दिलाउनु हुन्छ र दत्तात्रेयलाई नै धेरैजसो आफ्नो साथ राख्नुहुन्छ । दत्तात्रेयले आफ्ना चौबीस गुरुहरूबाट जुन शिक्षा प्राप्त गर्नुभएको छ, तिनको नाम र सुकामहरूको वर्णन दत्तात्रेयले महाराज यदुलाई सुनाउनु भएको थियो । त्यही म सूक्ष्मरूपले तिमीलाई सुनाउँछु । बाबु पद्मनाथ, धेरै पहिलेको कुरा हो । धर्मको मर्म सम्झाउनको लागि महाराज यदुले प्रार्थनाले भरिएको स्वरमा भगवान् दत्तात्रेयसँग सोध्नुभयो– प्रभु, तपाईं सधैँ आफ्नै स्वरूपमा मग्न रहनुहुन्छ । तपाईंलाई आत्मज्ञानको आनन्दको अनुभव कसरी भयो ? हामीलाई पनि त्यस आत्मज्ञानको अनुभव गराउने कृपा गर्नुहोस् । दत्तात्रेय भगवान् भन्नुहुन्छ– हे राजन् ! मैले आफ्नो जीवनमा चौबीस गुरुहरूबाट शिक्षा प्राप्त गरेर आफ्नो स्वरूपमा स्थित रहेर मुक्त भावबाट यस पथमा आरूढ रहेर नै जगत्को भ्रमण गर्दछु । मैले जल, अग्नि, वायु, पृथ्वी, आकाश, सूर्य, चन्द्रमा, समुद्र, परेवा, मौरी, मह झिक्ने मानिस, हात्ती, अजिङ्गर, पुतली, हरिण, माछा, गरुड, सर्प, माकुरो, भृंगी, बालक, पिंगला (वेश्या), कुमारी कन्या र वाण बनाउने यी चौबीस गुरुहरूका आचरणबाट जुन शिक्षा मलाई मिलेको छ र मैले जसलाई ग्रहण गरेको छु त्यही म तिमीलाई सुनाउँछु ध्यानपूर्वक सुन ।

हे राजा ! पृथ्वीबाट मैले धैर्य धारण र क्षमाको शिक्षा सिकेको छु । संसारका मानिसले पृथ्वीमा चाहे जतिसुकै आघात तथा उत्पात गरून् तर पृथ्वीले न ती मानिसहरूसँग बदला लिन्छिन्, न रुने-कराउने नै गर्छिन् । जगत्का हरेक प्राणी आ-आफ्नो बुझाइअनुसार क्रूरभन्दा क्रूर चेष्टा गर्छन् र समय-समयमा भिन्न प्रकारबाट जानेर-बुझेर पनि आक्रमण गर्छन् । यसैप्रकार पुरुषले पनि अधीर नभएर मैले गरेको व्यवस्थालाई सम्झोस् र क्रोधित नभई आफूलाई धैर्यवान् राखोस् । मानवहरू प्रभु इच्छा सम्झेर मनमग्न भएर ज्यूँकात्यूँ आफ्नो पथमा आरूढ भएर चल्दै रहून् । पर्वत, वृक्ष र पृथ्वीबाट मैले यही शिक्षा सिकेको छु कि पृथ्वीका सारा चेष्टाहरू सदैव आफ्नो नभई अर्काको (सबैको) हितको लागि नै हुन्छ । यसको जन्म नै सबैको हितको लागि भएको हो । सन्तजनले पनि यस शिक्षालाई ग्रहण गरेर परोपकारमा नै चल्ने आफ्नो मन-वचनबाट संकल्प गर्नू ।

मैले शरीरमा रहने प्राणवायुबाट यो शिक्षा ग्रहण गरेको छु कि त्यो केवल एक मात्र आहारको इच्छा राख्दछ र आहार मिल्ने बित्तिकै सन्तुष्ट हुन्छ । त्यस्तै, साधुहरूले पनि कमभन्दा कम जतिले भोक मेटिन्छ त्यति मात्र भोजन दिएर इन्द्रियहरूलाई सन्तुष्ट गर्नू । इन्द्रियहरूलाई तृप्त गर्नको लागि त्यति नै विषयको उपयोग गर्नु जसबाट बुद्धि विकृत भएर चंचल नहोस् र वाणीले व्यर्थको वार्ता नगरोस् । राजन्, शरीरबाट बाहिर रहने वायुबाट मैले यो सिकेँ कि जसरी वायुलाई अनेक ठाउँबाट जानुपर्छ तर वायु कहीँ पनि आसक्त हुँदैन । वायुले कसैको पनि गुण-दोष अपनाउँदैन । यसैगरी साधुले पनि अनेक पंथमा गए पनि आफ्नो लक्ष्यमा स्थित रहेर विचार गर्नू र कसैको पनि गुण-दोषतर्फ आसक्त नहुनू, न कुनै प्रकारको द्वेष गर्नू । गन्ध समेट्नु वायुको गुण होइन फेरि पनि वायुलाई गन्ध बोक्न त पर्छ नै । यस्तो भए पनि वायु शुद्ध नै रहन्छ । गन्धसित उसको कुनै पनि सम्बन्ध हुँदैन । त्यसरी नै साधुले पनि यस पार्थिव शरीरसँग सम्बन्ध रहिरहेसम्म भोक, प्यास, दुःख, सुख, पीडा आदिलाई पनि सहन गर्नुपर्छ । तर आफूलाई शरीर होइन, आत्मा सम्झने साधकले शरीर र शरीरका गुणहरूको सहारा लिएर पनि सर्वथा भगवान् भजन र परोपकारमा नै लिप्त रहन्छ ।

राजन्, जति पनि मठ, मन्दिर, शिवालय आदि छन्, ती चाहे चल हुन् वा अचल, तिनको भिन्न-भिन्न रूप देखेर पनि जसरी आकाश एक र परिछिन्न (अखण्ड) छ, त्यसैगरी, चल-अचल जति पनि सूक्ष्म तथा स्थूल शरीर छन् तिनको आत्मा रूपबाट सर्वत्र स्थित भएको कारणले ब्रह्म सबैमा छ । जस्तो आगलागी पनि हुन्छ, पानी पनि वर्षन्छ, अनाज आदि पनि उब्जन्छन् र नष्ट पनि हुन्छन्, वायुको कोपबाट बादल आउँछ र पानी वर्षाएर जान्छ । यी सबै घटना भए पनि आकाश अछुतो रहन्छ । आकाशको दृष्टिमा केही भएकै छैन । यसैप्रकार, भूत, वर्तमान र भविष्यको चक्करमा जुन जुन रूपबाट सृष्टि रचिए पनि, प्रलय भइरहे पनि आत्माको साथ यसको कुनै पनि सम्पर्क हुँदैन । साधकले मणिको मालामा रहेको धागोसमान आत्मालाई अखण्ड र अलग रूपमा देखोस्, त्यो यति विस्तृत छ कि त्यसको तुलना आकाशसँग नै गर्न सकिन्छ । यसकारण, साधकले आत्मालाई पनि आकाश रूपको भावनाबाट नै हेर्नुपर्छ । क्रमशः

जय गुरुदेव !

**दत्तात्रेय भगवान् भन्नुहुन्छ– हे राजन् ! मैले आफ्नो जीवनमा चौबीस गुरुहरूबाट शिक्षा प्राप्त गरेर आफ्नो स्वरूपमा स्थित रहेर मुक्त भावबाट यस पथमा आरूढ रहेर नै जगत्को भ्रमण गर्दछु । मैले जल, अग्नि, वायु, पृथ्वी, आकाश, सूर्य, चन्द्रमा, समुद्र, परेवा, मौरी, मह झिक्ने मानिस, हात्ती, अजिंगर, पुतली, हरिण, माछा, गरुड, सर्प, माकुरो, भृंगी, बालक, पिंगला (वेश्या), कुमारी कन्या र वाण बनाउने यी चौबीस गुरुहरूका आचरणबाट जुन शिक्षा मलाई मिलेको छ र मैले जसलाई ग्रहण गरेको छु त्यही म तिमीलाई सुनाउँछु ध्यानपूर्वक सुन ।**

# गुरु र शिष्य

*यस स्तम्भअन्तर्गत हामीले सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'सूली ऊपर सेज पिया की' विषयको प्रवचनलाई 'गुरु र शिष्य' शीर्षकमा प्रकाशन गरिएको छ ।*

शंकराचार्यको मृत्युको दुई हजार वर्षपछि आज हामीलाई अत्यन्तै पश्चाताप भइरहेको छ कि हामीले यति महान् व्यक्तित्वलाई समाप्त गर्‍यौं– मूर्खताद्वारा, गल्ती गरेर । आज जब हामी शंकरभाष्य पढ्छौं तब महसुस हुन्छ कि शंकराचार्य कति अद्वितीय विद्वान् थिए, कति परिश्रमी थिए, कति उच्चकोटिका योगी थिए, स्वयं शंकरका साक्षात् स्वरूप थिए, यी कुरा त हामीले आज महसुस गर्दैछौं ।

निश्चितरूपमा शिष्यमाथि गुरुको ऋण हुन्छ । ऋण यसकारण हुन्छ कि उहाँबाट शिष्यलाई ज्ञान प्राप्त भइरहेको छ । ज्ञान भनेको यस्तो कुरा हो जो सामान्यत: प्राप्त हुँदैन । गेरु वस्त्र लगाउँदैमा ज्ञान प्राप्त हुँदैन, चम्किलो वस्तु लगाएर मात्र पनि ज्ञान प्राप्त हुँदैन, उच्च सिंहासनमा बसेर ज्ञान प्राप्त हुँदैन, पाँच हजार अनुयायीहरूलाई आफ्नो पछाडि लगाउँदैमा पनि ज्ञान प्राप्त हुन सक्दैन, दस हजार व्यक्तिहरूबाट जयकार गराउनाले पनि ज्ञान मिल्न सक्दैन । म पाँच-पाँच रूपैँया खर्च गरेर सय, दुई सय शिष्यलाई जम्मा पार्न सक्दछु । यस्ता भीखमङ्गा धेरै छन् हरिद्वारमा, इलाहाबादको कुम्भमा धेरै पाइन्छन् जसलाई दिनको दस रूपैँयाँ दिएर आफ्नो पछि लगाउन सक्छु । यसरी पाँच हजार मानिसलाई पैसाले किनेर 'नारायण दत्त श्रीमालीको जय' भनेर जयकारमा लगाउन सक्छु । दस हजार संन्यासीले जयकार गर्दा त तिमीहरूले मलाई धेरै महान् ठान्न पनि सक्छौ । म यस्तो नाटक पनि गर्न सक्थें । मैले पाँच हजार रूपैँया खर्च गर्दा मात्र पनि पुग्दछ यस नाटकलाई सम्पन्न गर्न । तर मलाई यसको आवश्यकता छैन । नाटक त त्यसले गर्दछ जसमा केही हुँदैन, जसमा ज्ञानको गरिमा हुँदैन ।

वास्तविकता र सत्यलाई जुन क्षणदेखि मैले बोल्न छोड्छु त्यसै क्षणदेखि म गुरु रहनै सक्दिन । त्यस बेला मलाई गुरु भनाउने कुनै अधिकार पनि हुँदैन, हक पनि हुँदैन । यदि ममा ज्ञान छ, चेतना छ, ममा क्षमता छ भने म दुई शब्द अझ स्पष्ट भन्न सक्छु र भन्ने क्षमता राख्छु । वास्तवमा नै मलाई आफैमा गर्व छ, तिमीहरू पनि गर्वित हुनुपर्दछ किनकि तिम्रा गुरुले चुनौतिले भरिएका शब्दमा बोल्न सक्दछ, सुन्न सक्दछ ।

यसैले, मैले तिमीलाई आशीर्वाद दिन्छु कि तिमीमा यो पात्रता उत्पन्न होस्, तिमीले आफैलाई सुधार्न सक, आफैमा समर्पण उत्पन्न गर्न सक... र यी तीन तत्त्वको माध्यमबाट तिमीले आफ्नो रक्तलाई शुद्ध गर्न सक्दछौ... र जुन दिन तिमीले यसो

गर्छौ उसै दिन तिमी आफैमा सुन बन्नेछौ । पारस पत्थरलाई त हातमा लिएर बसेका छौ, बस एकपटक छुवाउन मात्र पर्नेछ, त्यसमा कुनै रासायनिक क्रिया छैन, एक सेकण्डको काम हो । यसका लागि तिमीले कति प्रयत्न गर्दछौ यो तिमीमा निर्भर हुन्छ ।

गंगालाई चार हजार माइल बगेर समुद्रमा पुग्नु पर्दछ । म समुद्रमा मिल्नु आवश्यक छैन, हजारौं मानिस ममा नै स्नान गरिरहेका छन्, लाखौं मानिस मेरो जयकार गरिरहेका छन्, समुद्र आफ्नो ठाउँमा छ, मलाई के छ र भनेर यदि गंगा बीच बाटोमा पर्ने हरिद्वारमा विश्राम लिन्छिन् भने गंगाको पानी त केवल स्नानका लागि उपयोगी भएर रहनेछ, उसलाई समुद्र देवता प्राप्त हुँदैन । भोलि गंगा सुकेमा मानिसले उसको जयकार पनि गर्दैनन् । उसको पूर्णता त यसैमा छ कि त्यो समुद्रमा गएर मिलोस्, त्यो कतै पनि नरोकियोस् ।

भोलि यदि कसैले तिम्रो जयकार गर्दछ भने तिमी रोकिन्छौ कि बस अब के छ ? अब त म सिद्ध भइसकें ! त्यो तिम्रो पूर्णता होइन । पूर्णरूपमा गुरुमा समर्पित हुने क्रियालाई पूर्णता भनिन्छ ।

र, पूर्णताको यही बाटोलाई मैले रोजें, म यस बाटोबाट हिँडेको छु । शिष्यको लक्षण, शिष्यको चिन्तन, शिष्यको विचार, शिष्य बनेर सेवा 'मैले' गरेको छु । यसैले म गर्वका साथ शिष्यको लक्षण र शिष्यको चिन्तनलाई सुनाउन सक्दछु, बुझाउन सक्दछु । केवल गेरु वस्त्र लगाएर मात्र प्रस्तुत भएको छैन, जयकार मात्र गराएको पनि छैन, मलाई केवल जयकारको मात्र आनन्द छैन, म स्वयं मेरो जयकार गर्नु आवश्यक छैन भनेर जयकार गर्नेहरूलाई मनाही गर्दछु ।

मेरो विचारमा यदि मसँग केही छ भने मानिसहरूले मलाई चिनिहाल्छन्, आज नभए पनि मरेको सय वर्षपछि अवश्य चिन्नेछन्, महसुस गर्नेछन् । शंकराचार्यको मृत्युको दुई हजार वर्षपछि आज हामीलाई अत्यन्तै पश्चाताप भइरहेको छ कि हामीले यति महान् व्यक्तित्वलाई समाप्त गर्‍यौं– मूर्खताद्वारा, गल्ती गरेर । आज जब हामी शंकरभाष्य पढ्छौं तब महसुस हुन्छ कि शंकराचार्य कति अद्वितीय विद्वान् थिए, कति परिश्रमी थिए, कति उच्चकोटिका योगी थिए, स्वयं शंकरका साक्षात् स्वरूप थिए, यी कुरा त हामीले आज महसुस गर्दैछौं ।

सायद मेरो मृत्युको हजार वर्षपछि, दुई हजार वर्षपछि अवश्य स्मरण गर्दछन् र जब स्मरण गर्दछन् तब त्यो व्यक्तित्व सामु हुँदैन जोसँग हामी कुरा गर्छौं, जसको चरणमा हामी बस्न सक्छौं, आनन्द लिन सक्छौं, जसद्वारा हामीले ज्ञान प्राप्त गर्न सक्दछौं... त्यो जीवनको न्यूनता हुन जानेछ ।

तिम्रो आँखा खोलिदिनका लागि ईश्वर सँग प्रार्थना छ, तिम्रो तेस्रो नेत्र जागृत होस्, तिमीमा आफ्नो सामु रहेको व्यक्तिको स्वरूपलाई पहिचान गर्ने क्षमता होस्, तिमीमा ज्ञानको अवगाहन उत्पन्न हुन सकोस्, र तिमीमा श्रद्धा र समर्पण आउन सकोस्, म तिमीलाई यही आशीर्वाद दिन्छु । समाप्त ।

# कामला रोग (Jaundice) र यसको उपचार

संसारको सृष्टिदेखि नै आजको एक्काइसौँ शताब्दीमा आइपुग्दा मनुष्यले अनेकौँ रोग व्याधिहरूसँग लड्दै आइरहेको छ। दिनानुदिन नयाँ-नयाँ सुख-सुविधाका उपायहरूको खोजीमा रुमल्लिरहेको मानव प्रकृतिमाथि विजय गर्न तल्लीन छ। प्रकृति र मनुष्यबीच सामञ्जस्यात्मक सम्बन्धबाट मात्र वास्तविक आरोग्यको प्राप्ति सम्भव छ भन्ने बुझाइको कमी टड्कारो रूपमा देखापरेको छ। सही आहार विहार र प्राकृतिक जीवनभन्दा टाढिएर जीवनयापन गर्दा लाग्ने रोगहरूमध्ये कामला रोग (Jaundice) प्रमुखरूपमा आउँछ। यो रोग लागिसकेपछि बिरामीले भोग्नुपर्ने पीडा र उपचारको कठिनाइका बारेमा त धेरैलाई जानकारी नै छ। त्यसैले यस अंकमा हामीले कामला रोग र यसबाट बच्न सकिने केही उपायहरूको बारेमा चर्चा गर्न गइरहेका छौँ।

**'कामं पितं लाति वर्द्धयति इति कामला।'**

'काम'को अर्थ पित्त र 'ल'को अर्थ बढ्नु हो। जसअनुसार पित्त बढ्नु नै कामला हो।

**पाण्डुरोगी तु योऽत्यर्थं पित्तलानि निषेवते। तस्य पित्तमसृग्मांसं दग्धवा रोगाय कल्पते॥** -च.सं.चि.१६/३४

अर्थात् पाण्डुरोगी (Anaemic) ले अत्यधिक मात्रामा पित्तवर्धक आहार सेवन गरेमा प्रकुपित पित्तले रक्त र मांसलाई जलाएर कामला रोग उत्पन्न गर्दछ। एलोप्याथी चिकित्साअनुसार कामला भन्नाले- शरीरको तरल पदार्थमा बिलिरुबिनको मात्रा बढेपछि छाला, आँखाको सेतो भाग र म्युकस मेम्ब्रेनमा देखिने पहेँलोपना भन्ने बुझिन्छ।

**कामलाका भेदहरू–**

आयुर्वेदीय ग्रन्थहरूमा विभिन्न प्रकारले कामलाका भेदहरू उल्लेख गरिएता पनि कामला रोग मुख्यतया दुई प्रकारको पाइन्छ।

१. कोष्ठाश्रित कामला :- कोष्ठ (Thoracoabdominal cavity) का प्रमुख अङ्ग कलेजो (Liver) र फियो (Spleen)मा विकृति उत्पन्न भएर हुने कामला कोष्ठाश्रित कामला हो। यसलाई हेमोलाइटिक (Haemolytic) एवं हेपाटोसेलुलर (Hepatocellular) जन्डिस अन्तर्गत समावेश गर्न सकिन्छ।

२. शाखाश्रित कामला :- शाखा अर्थात् धातुमा आश्रित भएर उत्पन्न हुने कामला शाखाश्रित कामला हो। कलेजोमा बनेको पित्त (Bile) जब पित्त नली, पित्त थैली एवं तद्जन्य अंग एवं शिरामा हुने विकृतिको कारण सहजरूपमा सानो आन्द्रामा पच्दै गरेको अन्नमा पुगेर मिसिन पाउँदैन तब उक्त पित्त रक्तमा मिसिएर कामलाको रूप लिन्छ जसलाई आधुनिक चिकित्सामा अब्स्ट्रक्टिभ जन्डिस (Obstructive Jaundice) भनिन्छ। यस प्रकारको जन्डिस पित्तथैलीमा बनेको पत्थरीका कारणबाट उत्पन्न हुन सक्छ।

**रोगका कारणहरू (Causes)** :-

नेपालजस्तो देशमा मद्य सेवन पनि कामला रोगको एउटा प्रमुख कारण हो। मद्य सेवनले मूल रूपमा कलेजोलाई हानी पुऱ्याउने गर्दछ। त्यसैले अति मद्यपान गर्ने मानिसमा यो रोग लाग्ने बढी सम्भावना हुन्छ। अति मद्य सेवन नगर्ने, ढिलो पच्ने, तारेको, भुटेको खानेकुरा कम खाने, चिल्ला, बासी र दूषित पदार्थ लगायत मूलरूपमा दूषित जलको सेवन नगर्ने, अधारणीय वेगहरूलाई नरोक्ने आदि क्रियाबाट नै यस रोगबाट सजिलै बच्न सकिन्छ। रोग लाग्ने अन्य कारणहरू यसप्रकार छन्-

१. फोहोर वा दूषित जलको सेवन गर्नाले।
२. अम्ल-लवण-कटु रस प्रधान द्रव्यहरूको अत्यधिक सेवन गर्नाले।
३. मद्यहरू जस्तै जाँड, रक्सी, बियर तथा अन्य अल्कोहलिक पदार्थको सेवन गर्नाले।
४. दिनमा सुत्ने र रात्रिमा धेरै जागरण बस्नाले।
५. प्यारासिटामोल, क्लोरामफेनिकोल जस्ता कलेजो कमजोर पार्ने औषधिहरू (Hepatotoxic drugs) को अत्यधिक प्रयोगबाट।
६. माटो वा तद्जन्य वस्तुहरूको सेवन गर्नाले।

**लक्षणहरू** (Symptoms) :-

१. शुरु-शुरुमा मूत्र, आँखाको सेतो भाग पहेँलो देखिन्छ र पछि बिस्तारै प्रकुपित दोष सम्पूर्ण शरीरमा फैलिएर पूरै शरीर नै पहेँलो देखिन्छ।
२. छाला चिलाउँछ।
३. भोक घट्दछ।
४. वाक्-वाक् लाग्दछ।
५. इन्द्रियहरूको आफ्नो विषय ग्रहण गर्ने क्षमतामा ह्रास आउँछ।
६. यदि शाखाश्रित कामला भएमा दिशा तीलपिष्टसमान खैरो रङ्गको अर्थात् विकृत रंगको हुन्छ।

**चिकित्सा विधि :**

अंग्रेजीमा एउटा उक्ति छ- 'प्रिभेन्सन इज बेटर देन कियोर' अर्थात् रोग लागेर उपचार गर्नुभन्दा पहिले नै रोग लाग्न नै नदिनु बेस हो। आयुर्वेद ग्रन्थहरूमा उल्लिखित आचरण, दिनचर्या, ऋतुचर्या, रात्रिचर्या अनुसार चल्नु, आहार-विहार सही तरीकाबाट गर्नु नै रोगबाट बच्ने प्रमुख साधन हुन्।

रोग लागिसकेपछि पित्तशामक द्रव्यहरूबाट यस रोगको उपचार गरिन्छ। पित्त शमनका लागि विरेचन (Purgation) महत्त्वपूर्ण विधि हो। विरेचन गराउने औषधहरू जस्तै: त्रिफला, त्रिवृत्त, घृतकुमारी, मूत्र विरेचक जस्तै: पुनर्नवा, भूमिअमला आदि

लाभदायक हुन्छन् । त्यसैगरी रक्तशोधक औषधहरू नीम, गुर्जो पनि उपयोगी छन् ।

केही प्रचलित औषध योगहरूमध्ये कुनै एउटा योग चिकित्सकको सल्लाहानुसार प्रयोग गर्न सकिन्छ ।

१. हलेदो, त्रिफला, त्रिकटु, वायुविडङ्ग र मण्डुर भस्म सम परिमाणमा अलग-अलग पिसेर चूर्ण बनाई सम्पूर्णको मिश्रण तयार गर्ने र १ ग्राम चूर्णसँग ६ ग्राम मह, ३ ग्राम घ्यू मिसाएर सन्चो नभएसम्म खानुपर्दछ ।

२. तीते करेलाको बियाँलाई पानीमा घोटेर नश लिनाले आराम हुन्छ ।

३. टटेलाको बोक्राको स्वरस, भूमि अमलाको पञ्चाङ्ग स्वरस र पुनर्नवाको पञ्चाङ्ग स्वरस ३-३ ग्राम बिहान बेलुका सेवन गर्ने ।

४. प्रात: कालमा त्रिफला क्वाथ वा गुडुची स्वरस वा दारुहरिद्राको क्वाथ सेवन गर्ने ।

शुद्ध गाईको दूध, गोमूत्र, अनारको रस, गाजर, मूला र प्रशस्त मात्रामा पानी आदि । पथ्य विहारमा बेड रेस्ट अर्थात् आराम गर्नुपर्दछ, दिनदिनै कपडा सफा गर्नुपर्दछ ।

**अपथ्य आहारहरू :-**

चिल्लो, पीरो, बासी, बोसोयुक्त, ढिलो पच्ने, कडा स्वभावका खाद्य पदार्थहरू, अत्यधिक तातो तथा चिसो सेवन नगर्ने । अपथ्य विहारमा व्यायाम गर्नु, मानसिक तनाव उठाउनु आदि पर्दछन् ।

नोट:- कामला रोग लाग्नेबित्तिकै हामी जानी-नजानी अनेक थरीका जडीबुटीलगायत अन्य औषधिहरूको सेवन गर्दछौं त्यो गलत प्रवृत्ति हो । अत: कामलाको शङ्का लाग्ने बित्तिकै नजिकको अस्पतालमा गएर कुन प्रकारको र कति ग्रेडको जन्डिस हो भन्ने थाहा पाएर मात्र सम्बन्धित चिकित्सकबाट परामर्श लिएर उपचार गर्नुपर्दछ । शाखाश्रित कामलामा शल्यक्रिया नै प्रधान उपचार मानिन्छ भने वंशाणुगत कामलाहरू असाध्य मानिन्छन् । जय गुरुदेव !

**सन्दर्भ ग्रन्थहरू:**


चरक संहिता- आ. विद्याधर शुक्ल र प्रो. रविदत्त त्रिपाठी

आरोग्य विज्ञान - खप्तड बाबा

काय चिकित्सा - डा. विद्याधर शुक्ल

डेभिड्सन्स मेडिसिन


**मैले आफ्ना शिष्यहरूलाई धन सम्पत्ति, जग्गा जमिन नदिए पनि आफ्नो चेतना, आफ्नो स्वतन्त्रता, आफ्नो तेजस्वीता उत्तराधिकारीको रूपमा दिन चाहन्छु ।**

**- परमपूज्य सद्गुरुदेव**

# हार्दिक श्रद्धाञ्जली

**स्व. केदारमान जोशी**

हाम्रा अति मिलनसार, मृदुभाषी, सहयोगी सहयात्री **श्री केदारमान जोशी**ज्यूको मिति २०६५ श्रावण ६ गतेका दिन निधन भएकोले यस दु:खद घडीमा उहाँको आत्मालाई चिर शान्ति प्राप्त होस् तथा मोक्ष प्राप्त होस् र उहाँको परिवारमा यस दु:खद घडीमा धैर्यधारण गर्ने शक्ति मिलोस् भनी परम आराध्य सद्गुरुदेवहरूसमक्ष हृदयदेखि नै प्रार्थना गर्दछौं ।

दाजु- बुद्धकुमार श्रेष्ठ भाउजु- विष्णुदेवी श्रेष्ठ

भतिजाहरू- सुशीलकुमार श्रेष्ठ, सुबोधकुमार श्रेष्ठ

भतिजी- सुष्मा श्रेष्ठ भतिजी ज्वाइँ- सुमनकुमार अमात्य

# जानकारी

आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक **गोरक्ष निखिल वाणी**को सदस्यता ग्रहण गरेर पत्रिकालाई जनजनमा पुऱ्याउन महान अभियानमा सहभागी हुनुभएका पत्रिकाका समस्त ग्राहक महानुभावहरूलाई हार्दिक धन्यवाद दिँदै यसै महान् कार्यको निरन्तरतालाई दिगो राख्दै यहाँहरूको पत्रिका सदस्यता नवीकरण गर्नुपर्ने भएमा वा नयाँ सदस्य ग्रहण गर्नु परेमा पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग, संस्थाका सम्पर्क कार्यालय वा आरती सञ्चालन केन्द्र र प्रचार प्रसार केन्द्र रहेका स्थानमा अथवा पत्रिका घर-घरमा वितरण गर्न आउँदा सम्बन्धित वितरकसँग सम्पर्क राख्न हुन अनुरोध छ ।

**पत्रिका वितरण तथा**

**पुस्तकालय व्यवस्थापन उपविभाग**

**सिद्धाश्रम शक्ति केन्द्र**

# ध्यान! ध्यान!! ध्यान!!!

## तान्त्रिक साधना तान्त्रिक ध्यान मानव जीवनको वास्तविक ज्ञान

परमपूज्य सद्गुरुदेवहरुको असीम कृपाले
सिद्धाश्रम शक्ति केन्द्रमा विभिन्न तहका तान्त्रोक्त ध्यानका कक्षाहरु सञ्चालन भइरहेको हुनाले उक्त ध्यानका कक्षाहरुमा प्रवेशका लागि केन्द्रलगायत विभिन्न सम्पर्क कार्यालयहरुमा सम्पर्क राख्नुहोला।

**सिद्धाश्रम शक्ति केन्द्र**
**बसुन्धरा, काठमाडौँ**

## पत्रिका सदस्यता विस्तारका लागि हार्दिक आह्वान

परमपूज्य सद्गुरुदेवहरूको असीम कृपा, अनुकम्पास्वरूप गोरक्ष निखिल वाणी प्रकाशनको निरन्तरतालाई कायम राख्दै दशौं वर्षमा प्रवेश गर्न सफल हुनाका साथै नेपाल सरकार, प्रेस काउन्सिलको पत्रिका वर्गीकरणमा 'क' श्रेणीमा पर्न सफल भएको सहर्ष जानकारी गराउँदै आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिकलाई यस स्तरसम्म लिएर आउने महान् कार्यमा सक्रियरूपमा सहभागी सबैलाई हार्दिक धन्यवाद दिन चाहन्छौं। यस मासिकलाई अझै पठनीय, संग्रहणीय र स्तरीय बनाउने कृतसंकल्प गर्दै पत्रिकामार्फत सद्गुरुदेवहरूको चिन्तन विस्तार गर्न र जन–जनमा आध्यात्मिक ज्ञानको प्रकाश फैलाउन यस पत्रिकाको ग्राहक विस्तार योजनामा भाग लिई अक्षय पुण्य आर्जन गर्नका लागि सम्पूर्ण साधक साधिका, कार्यकर्ता र जिज्ञासु महानुभावहरूमा हार्दिक अनुरोध गर्दछौं। पत्रिका विस्तारका लागि आवश्यक रसिदका लागि संस्थाको पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग, नजिकका सम्पर्क कार्यालय एवं आरती संचालन केन्द्रहरूमा सम्पर्क राख्नुहुन पनि सूचित गरिन्छ।

**सिद्धाश्रम शक्ति केन्द्र**
पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग
फोन नं २१००१५३, ०१६२२५१७७

### भावपूर्ण श्रद्धाञ्जली

जन्म ११११/१२/२४

स्वर्गारोहण २०६५/१/५

हाम्रा अनन्य मित्र श्री रामकुमार माकजुका पूजनीय पिता **स्व. श्री सानुबहादुर माकजु**को स्वर्गारोहण भएकोले दिवंगत आत्माको चिर शान्तिको लागि साथै शोक सन्तप्त परिवारलाई धैर्यधारण गर्ने शक्ति सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजबाट असीम कृपा मिलोस् भनी प्रार्थना गर्दछौं।

**महेश्वर न्यौपाने**
**अध्यक्ष** *तथा*
**वातावरण संरक्षण मञ्च भक्तपुर परिवार**

# भैरव र भैरवी मुद्रा

भैरव र भैरवी मुद्राहरूको सम्बन्ध प्रत्यक्षरूपमा भगवान् भैरव एवं माता भैरवीसँग रहेको छ । यस मुद्राको अभ्यासबाट साधकहरूमा भगवान् भैरवको कृपा एवं साधिकाहरूमा माता भैरवीको कृपा एवं आशीर्वाद प्राप्त हुन्छ । साथै, भैरव एवं भैरवी साधना एवं ध्यानको अवस्थामा यस मुद्राको अभ्यासबाट धेरै गुणा दिव्यशक्ति (भैरव एवं भैरवी) लाई प्राप्त गर्न सकिन्छ । यी दुवै मुद्राहरू उस्ता-उस्तै देखिए पनि हात भने तल-माथि फरक-फरक हुने गर्दछ जसमा साधकहरूले दायाँ हातलाई बायाँ हातमाथि राख्नुपर्दछ भने साधिकाहरूले बायाँ हातलाई दायाँ हातमाथि राख्नुपर्दछ । दायाँ भाग पुरुषप्रधान र इडा नाडीसँग सम्बन्धित हुन्छ भने बायाँ भाग प्रकृतिप्रधान पिंगला नाडीसँग सम्बन्धित छ । मुद्राको अभ्यास गर्ने विधि तल प्रस्तुत गरिएको छ ।

**भैरव मुद्रा विधि**

यस मुद्राको अभ्यास गर्दा कुनै पनि आसनमा ढाडलाई सीधा गरी सजिलोसँग बस्ने ।

ध्यान गर्ने कुनै पनि आसनमा बसेर दायाँ हातलाई बायाँ हातमाथि चित्रमा देखाए झैँ गरी राख्ने ।

सबै (पाँचवटै) औँलालाई सीधा गरी आरामपूर्वक एक हातमाथि अर्को हात सजिलोसँग आफ्नो काखमा राख्ने ।

सम्पूर्ण शरीरलाई आरामसँग राखी भगवान् भैरवको ध्यान गर्ने ।

**भैरवी मुद्रा विधि**

सजिलोसँग ध्यान वा साधना गर्दा बस्ने आसनमा बस्ने ।

सजिलोसँग ढाडलाई सीधा गरी उपयुक्त आसनमा बसी दायाँ हातमाथि बायाँ हातलाई आफ्नो काखमा (नाभिभन्दा तल काखमा) राखी अभ्यास गर्न सकिन्छ ।

शरीरका अन्य भागहरूलाई पनि आरामसँग राखी माता भैरवीको ध्यान गर्न सकिन्छ ।

**फाइदा**

यस मुद्राको अभ्यासबाट साधकमा भैरव शक्ति र साधिकामा भैरवी शक्ति प्राप्त गर्न सजिलो र सहज बन्दछ । भैरव एवं भैरवी शक्तिबाट साधक वा सधिकामा भएका सम्पूर्ण नकारात्मक विचार, भावना, सोचाइ, चिन्तन हट्दछन् । साथै, विघ्न-बाधाहरूलाई हटाउनलाई यो मुद्रा अचुक मानिन्छ भने प्राण शक्तिलाई ऊर्ध्वगामी बनाउन मद्दत पुग्दछ ।

**तान्त्रिक साधना**
**तान्त्रिक ध्यान**
**मानव जीवनको**
**वास्तविक ज्ञान ।**

# ऋषिपञ्चमी व्रत

**हरितालिका तीज**

तीज पर्व भाद्र शुक्ल द्वितीयादेखि शुरु भई पञ्चमीसम्म मनाइन्छ । यो हिन्दु महिलाहरूले मनाउने सबैभन्दा ठूलो पर्व हो । खासगरी भाद्र शुक्ल तृतीयाको दिन नै तीज हो । तीजको पहिलो दिन द्वितीयामा दर खाने चलन छ । विभिन्न परिकारका खाद्य, मिष्ठान्न बनाएर दर खाने खुवाउने गर्दछन् । यस धार्मिक पर्वसँग मनोरंजन पनि जोडिएको छ । विवाह गरी पतिका घर गएका छोरीचेलीहरूलाई माइतीले ल्याउँछन् । यस पर्वभरि माइतीमा जम्मा भएका चेलीहरू मन्दिर, देवालयमा जम्मा भएर तीजका गीत गाउँदै नाच्छन् । आफूले भोगेका दुःख, सुखका घटनालाई गीतमा उतार्दै नाचेर मनोरञ्जन गर्दछन् । भोलिपल्ट तृतीयाको दिनमा शुद्ध जलाशयमा स्नान गरी पवित्र भई शुभ मनले निराहार व्रत लिन्छन् । दिउँसो शिव मन्दिर अथवा ठूलो चौरमा भेला भएर दिनभरि नाचगान गरेर बिताउँछन् । विवाहित महिलाहरू राता लुगा र गहनामा सजिएका हुन्छन् । कन्याहरू पनि व्रत र नाचगानमा सहभागी हुन्छन् । यसरी निराहार व्रत लिनाले जन्म-जन्मान्तरका पाप नाश हुन्छ, पतिको आयु बढ्दछ, कन्याहरूले योग्य वर पाउँछन् भन्ने विश्वास छ । दिनभरि निराहार व्रत बसेका महिलाहरू साँझमा भगवान् शिवको पूजा गरेर कन्यालाई टीका लगाई दक्षिणा दिएर फलाहार गर्दछन् ।

भाद्र शुक्लपक्षको पञ्चमीलाई 'ऋषिपञ्चमी'को रूपमा चिनिन्छ । यस दिन बसिने व्रतलाई ऋषिपञ्चमी व्रत भनिन्छ । यो व्रत ज्ञात-अज्ञात पापहरूको शमनका लागि गरिन्छ । अतः स्त्री-पुरुष दुवैले यस व्रतलाई अपनाउँछन् । स्त्रीहरूबाट रजस्वला भएको बेलामा घरका पात्रादिको प्रायः स्पर्श हुन जान्छ, यसबाट हुने पापको शमनका लागि स्त्रीहरू यो व्रत बस्दछन् । यस व्रतमा सप्तर्षिहरूसहित अरुन्धतीको पूजन हुने हुनाले यसलाई ऋषिपञ्चमी भनिन्छ ।

**व्रत विधान–**

यस दिन व्रत बस्नेले प्रातःकालमा उठेर मध्याह्नपर्यन्त उपवास गरेर मध्यान्हमा कुनै नदी वा तालमा गएर अपामार्गले दाँत माझी शरीरमा माटो लगाएर स्नान गर्नुपर्दछ । त्यसपछि घर आएर गोबरले पूजा-स्थानलाई लिप्नु पर्दछ । अनेकौं रङले सर्वतोभद्रमण्डल बनाएर त्यसमा माटो अथवा तामाको गाग्री स्थापित गरेर त्यसलाई वस्त्रले वेष्टित गरी त्यसमाथि तामाको अथवा माटोकै भाँडोमा जौ भरेर राख्नुपर्दछ । व्रतको प्रारम्भमा यस्तो संकल्प गर्नुपर्दछ–

अमुकगोत्रा अमुकीदेवी अहं मम आत्मनोरजस्वलावस्थायांगृहभाण्डादिस्पर्शदोषपरिहारार्थ अरुन्धतीसहितसप्तर्षिपूजनं करिष्ये ।

कलशसमीप नै अष्टदल कमल बनाएर त्यसका प्रत्येक दलमा कश्यप, अत्रि, भरद्वाज, विश्वामित्र, गौतम, जमदग्नि तथा वसिष्ठ सप्तर्षिहरू र अरुन्धतीको षोडशोपचारपूर्वक पूजन गर्नुपर्दछ । यस दिन नूनको प्रयोग गर्न र हलले जोतेको अन्न खान वर्जित छ । दिनमा केवल एकपटक मात्र भोजन गर्नुपर्दछ ।

कलश आदि पूजन सामग्री ब्राह्मणलाई दान गर्नुपर्दछ । पूजनपश्चात् ब्राह्मणलाई भोजन गराएर मात्र आफूले प्रसाद लिनुपर्दछ ।

**कथा**

सत्ययुगमा श्येनजित नामक एकजना राजा राज्य गर्दथे । उनको राज्यमा सुमित्र नाम गरेका एक ब्राह्मण बस्दथे जो वेदका विद्वान् थिए । सुमित्र खेतीद्वारा आफ्नो परिवारको भरण-पोषण गर्दथे । उनकी पत्नी

जयश्री सती, साध्वी र पतिव्रता थिइन् । तिनी खेतको काममा पनि आफ्नो पतिलाई सहयोग गर्दथिन् । एकपटक तिनले रजस्वला अवस्थामा अनजानमा नै घरका सबै कार्य गरिन् र पतिलाई पनि स्पर्श गर्न पुगिन् । दैवयोगबाट पति-पत्नीको शरीरान्त एकैसाथ भयो । रजस्वला अवस्थामा स्पर्शास्पर्शको विचार नराखेको हुनाले स्त्रीले कुकुर्नी र पतिले गोरुको योनि प्राप्त गरे । परन्तु पूर्वजन्ममा गरिएका अनेक धार्मिक कृत्यका कारण उनीहरूमा पहिलेको ज्ञान भने भइरहेको थियो । संयोगले यस जन्ममा पनि उनीहरू साथ-साथ आफ्नै घरमा आफ्ना छोरा-बुहारीका साथ बसिरहेका थिए ।

ब्राह्मणको पुत्रको नाम सुमति थियो । ऊ पनि आफ्ना पितासमान वेदको विद्वान् थियो । पितृपक्षमा उसले आफ्ना माता-पिताको श्राद्ध गर्नका लागि पत्नीलाई खीर बनाउन लगायो र ब्राह्मणहरूलाई निमन्त्रणा दियो । तर एउटा सर्प आएर खीरलाई विषाक्त गरिदियो । कुकुर्नी बनेकी ब्राह्मणीले यो सबै देखिरहेकी थिइन् । उनले सोचिन् कि यदि यस खीरलाई ब्राह्मणले खाएमा विषको प्रभावले मर्न सक्छन् र सुमतिलाई पाप लाग्छ । यस्तो विचार गरेर तिनले सुमतिकी पत्नीनजिक गएर नै खीरलाई छोइदिइन् । यसबाट सुमतिकी पत्नी अत्यन्त क्रोधित भई । उसले चुल्होबाट बलिरहेको दाउरा उठाएर कुकुर्नीलाई पिटी र भोजन पनि दिइन ।

राति कुकुर्नीले गोरुलाई सारा घटना बताइन् । गोरुले भने– मसँग दिनभरि काम लिएर आज त मलाई पनि केही खान दिइन । सुमतिले हामी दुवैको लागि श्राद्ध गरिरहेको छ, हामीलाई नै भोकै राखिरहेको छ । यसप्रकार हामी दुवै जना भोकै रह्यौं भने श्राद्ध गर्नुको कुनै औचित्य छैन ।

सुमति ढोकामा सुतिरहेका कुकुर्नी र गोरुको वार्तालाई सुनिरहेको थियो । उसले पशुको भाषालाई राम्रोसँग बुझ्दथ्यो । उसलाई आफ्ना माता-पिता निकृष्ट योनिमा परेको कुरा थाहा पाएर अत्यन्तै दुःख

**उहाँले सुमतिलाई भने– तिमीहरू पति–पत्नी मिलेर भाद्रशुक्ल पञ्चमीको ऋषिपञ्चमीका दिन व्रत गर्नू र त्यस दिन गोरुले जोतेको कुनै पनि अन्न नखानू । यस व्रतको प्रभावबाट तिम्रा माता–पितालाई पशुयोनिबाट मुक्ति मिल्छ । मातृ–पितृभक्त सुमतिले ऋषिपञ्चमीको व्रत गऱ्यो जसको प्रभावले उसका माता–पितालाई पशुयोनिबाट मुक्ति मिल्यो ।**

भयो । ऊ दौडेर एकजना ऋषिको आश्रममा पुग्यो । उसले ऋषिलाई आफ्ना माता-पिता पशुयोनिमा पर्नुको कारण र मुक्तिको उपाय सोध्यो । ऋषिले ध्यान र योगबलबाट सम्पूर्ण कुरा थाहा पाए । उनले सुमतिलाई भने– तिमीहरू पति-पत्नी मिलेर भाद्रशुक्ल पञ्चमीको ऋषिपञ्चमीका दिन व्रत गर्नू र त्यस दिन गोरुले जोतेको कुनै पनि अन्न नखानू । यस व्रतको प्रभावबाट तिम्रा माता-पितालाई पशुयोनिबाट मुक्ति मिल्छ । मातृ-पितृभक्त सुमतिले ऋषिपञ्चमीको व्रत गऱ्यो जसको प्रभावले उसका माता-पितालाई पशुयोनिबाट मुक्ति मिल्यो ।

यो व्रत शरीरद्वारा अशौचावस्थामा गरिएका स्पर्शास्पर्श तथा अन्य पापहरूको प्रायश्चितको लागि गरिन्छ । यस व्रतबाट स्त्रीहरूले रजस्वलावस्थामा स्पर्शास्पर्शको ध्यान दिनु पर्ने शिक्षा लिनुपर्दछ । पुरुषहरूले पनि यस दिन संयमपूर्वक बस्नु आवश्यक छ ।

(कल्याण, व्रतपर्वोत्सव अंक)

# कुशे औँसी

भाद्र कृष्णपक्षको अमावस्यालाई कुशे औँसी भनिन्छ । कुश एक प्रकारको घाँस हो । कुशविना हिन्दुहरूको कुनै पनि धार्मिक कार्य सम्पन्न हुँदैनन् । कुशलाई भगवान् विष्णुको प्रतीक मानिन्छ । जालन्धरकी पत्नी वृन्दाको सतीत्वलाई विष्णुले छल गरेर हरण गरेपछि वृन्दाले विष्णुलाई श्राप दिँदै रुख, प्रस्तर, घाँस र झारपात हुन परोस् भनेर सरापेकी थिइन् । त्यसैले शालिग्राम, पीपल, तुलसी र कुशलाई विष्णुकै प्रतीक मानिन्छ । यी सबै पूज्य छन् । कुशको ठूलो महत्त्व छ । यसै दिन कुशलाई विधिपूर्वक जरैबाट उखेलेर घर-घरमा भित्र्याइन्छ र वर्षभरिका चाडपर्व, व्रत, पूजा, संस्कार गर्दा प्रयोग गरिन्छ । अरु दिन ल्याइएको कुश काम लाग्दैन । जाडो महिनामा सुकेर नष्ट हुने हुँदा खोजेर पनि पाइँदैन ।

यस पर्वलाई पितृऔँसी पनि भनिन्छ । यसै दिन सन्तानले आफ्ना पिताको मुख हेर्दछन् । वैदिक परम्परामा पिता, माता, गुरु र अतिथिलाई जीवित देवता मानिएको छ । संसारको सृष्टिक्रममा पनि आमाले सन्तानलाई जन्म दिने, लालनपालन गरेर हुर्काउने र पिताले शिक्षा-दीक्षा दिएर योग्य बनाउन निकै कष्ट सहने गर्दछन् । त्यसैले, सन्तानले पनि जन्मदाता मातापिताको आदर, सत्कार, सेवा-सुश्रुषा गर्नुपर्छ । जीवित छउन्जेल सेवा, सत्कार नगर्ने सन्तानले तिनको श्राद्ध गर्नुको कुनै अर्थ रहँदैन । जीवित मातापिताको सेवा गरेमा मात्र पितृको ऋण तिर्न सकिन्छ । यसैकारण, पितृऔँसीमा पिताको मुख हेर्ने चलन चलेको हो । यस दिन विभिन्न खाद्य परिकार र मिष्ठान्न एवं उपहारहरू पितालाई अर्पण गर्दछन् । टाढा-टाढाका सन्तानहरू पनि पितालाई भेट्न आउँछन् । पिता नहुनेहरूले यस दिन काठमाडौँको उत्तरपूर्वमा अवस्थित गोकर्णको उत्तरबाहिनी नदी (चन्द्रभागा) र वागमतीको संगममा गएर शुद्ध मनले पिताको नाममा श्राद्ध गरी पिण्डदान गर्दछन् र त्यहीँ अवस्थित गोकर्णेश्वर महादेवको मन्दिरमा गएर दर्शन गर्दछन् ।

यसै सन्दर्भमा एउटा प्रचलित कथा पाइन्छ– एक दिन एकजना वैश्यको छोराले आफ्ना मृत पिताको सम्झनामा गोकर्णमा गएर श्राद्ध कर्म गरेर दान गरेको पिण्ड नदीमा सेलाउन लाँदा धेरै पितृहरू पिण्ड लिन आएछन् । उसले आफ्ना पिता चिन्न नसकेपछि सृष्टिकर्ता ब्रह्मा प्रकट भएर पिता चिनाइदिनु भयो । त्यसपछि उसले आफ्नो पिताको हातमा पिण्ड राखिदिए । पिताले प्रसन्न भएर पिण्ड ग्रहण गरेर छोरालाई आशीर्वाद दिए । त्यो दिन पितृऔँसीको दिन थियो । उनै पिताको पुण्यको प्रतापले पुत्र चक्रवर्ती सम्राट भएछ । त्यसै बेलादेखि भाद्र कृष्ण औँसीको दिनमा पितृहीन छोराछोरीहरू गोकर्णको उत्तरबाहिनी र वागमतीको सङ्गममा गएर स्नान गरी पितृको सम्झनामा श्राद्ध गरी गोकर्णेश्वर महादेवको दर्शन गर्ने परम्परा चलिआएको हो । यस दिन गोकर्णमा गएर श्राद्ध र पिण्डदान गरेमा आफ्ना पितृहरूले शिवलोकमा वास गर्न पाउँछन् भन्ने विश्वास रहेको छ ।

गोकर्ण यति दिव्य तथा चैतन्य ठाउँ हो भन्ने कुरा यससम्बन्धी अरु किंवदन्तीहरूले पनि पुष्टि गर्दछ । जिउँदै नरकमा परेको गोकर्ण नामक छोराले प्रेत योनिमा रहेको बाबुको श्राद्ध गरेको दिन संयोगवश पितृऔँसीको दिन परेको हुनाले गोकर्णकै नामबाट यसको नाम गोकर्णेश्वर रहन गएको भन्ने किंवदन्ती एकातिर रहेको छ भने अर्कोतिर भगवान् शिव लुप्त हुनु भएको र पछि ब्रह्मा, विष्णु र इन्द्रले भेट्टाएर पक्रन घेरा हाल्दा मृगरूप शिव भाग्न थाल्नुभएको र तीनै जनाले सिंगमा समातेपछि शिव भगवान् अन्तर्धान भई सिंग भाँचिएर तीन टुक्रा भई तीनै जनाको हातमा परेकोले उक्त सिंगलाई इन्द्रले स्वर्गमा, विष्णुले पातालमा र ब्रह्माले मर्त्यलोक (पृथ्वी) मा स्थापना गरी तिनै लोकको रक्षा गर्नुभयो । ब्रह्माले पृथ्वी (गोकर्ण) मा सिंग स्थापना गर्नु भएको हुनाले गोकर्णेश्वर महादेव नाम रहन गयो र उक्त स्थान पवित्र तीर्थस्थलमा गनियो भन्ने किंवदन्तीको भनाइ रहेको छ ।

## औंलाहरूबीचको दूरी

दुई औंलाबीचको खाली स्थानले पनि आफैमा महत्त्व राख्दछ। यदि बूढी औंला र चोर औंलाबीच अधिक दूरी छ भने त्यस व्यक्तिमा मानवीय गुण प्रचुर मात्रामा रहन्छ तथा उसमा प्रेम, दया, क्षमा आदि मानवोचित गुण सहज, स्वाभाविक रूपमा प्राप्त हुन्छ। यदि चोरी र माझी औंलाबीच खाली स्थान देखिन्छ भने त्यस्तो व्यक्ति आफ्नो विचारमा स्वतन्त्र हुन्छ तथा आफ्नो कुरालाई सबैको सामु भन्न हिच्किचाउँदैन। माझी र साहिँली औंलाबीच खाली स्थानले व्यक्तिको लापरवाही र असभ्यता प्रदर्शन गर्दछ। यसैप्रकार साहिँली र कान्छी औंलाबीचको खाली स्थानले व्यक्ति हत्यारा र निर्दयी छ भन्ने दर्शाउँछ।

**औंलाको अग्र भाग :**

औंलाहरूका अगाडिको भाग पनि भविष्य कथनमा धेरै नै महत्त्वपूर्ण छ। हस्तरेखा शास्त्रका अनुसार यी अगाडिका भागहरू चार प्रकारका हुन्छन् :

१.तीखो २.चेप्टो ३.चुच्चो र ४. वर्गाकार।

कैयौंपटक यस्तो पनि अनुभवमा आएको छ कि सबै औंलाहरूको अग्रभाग एक समान नै हुन्छन् र कैयौं पटक अलग-अलग औंलाहरूका अगाडिका भागहरू अलग-अलग प्रकारका हुन्छन्।

यहाँ सामान्य रूपमा यसको वर्णन गरिन्छ–

**१. तीखो औंला–**

जसको हातमा तीखो औंला हुन्छ अथवा जसको अग्रभाग तीखो हुन्छ ऊ अत्यन्त नै श्रेष्ठ तथा समाजमा अग्रणी मानिन्छ। यस्तो व्यक्ति दार्शनिक, कलाकार, संगीतकार तथा आफ्नो आत्माअनुसार चल्ने हुन्छ। उसको हृदयमा घृणा, क्रोध र अविवेक हुँदैन बरु दया, प्रेम र स्नेहले हृदय पूर्णरूपमा भरिएको हुन्छ।

अत्यधिक तीखो औंलाले मस्तिष्कको पागलपनलाई स्पष्ट गर्दछ। यस्ता व्यक्तिहरू केवल कल्पनामा नै हराइरहेका हुन्छन्। यस्तो व्यक्तिको जीवनमा सफलता कम नै मिल्दछ। तान्त्रिकहरूको औंला सामान्यतया यस्तो नै हुन्छ। जहाँसम्म ज्ञात छ, मनुष्यहरूमा ती व्यक्तिहरू धेरै सभ्य र उन्नत हुन्छन् जसका औंलाहरूका अगाडिका भागहरू सामान्यरूपमा तीखा हुन्छन्।

**२. चेप्टो औंला–**

यस्ता औंलाहरू कार्यकुशलता र स्फूर्तिका सूचक हुन्। यस्तो औंला भएको मानिस लगातार आफ्नो कार्यमा लागिरहन्छ तथा कुनै पनि कार्यलाई बीचमा छोड्दैन। जबसम्म कुनै कार्य राम्रोसँग सम्पन्न हुँदैन तबसम्म विश्राम लिँदैन। व्यक्तिमा प्रशस्त आत्मविश्वास हुन्छ र आफ्नो आत्मविश्वासको बलमा नै कार्यहरूलाई पूर्णतासम्म पुऱ्याउँदछ। यस्तो व्यक्ति सफल युद्ध विशारद, संगीतकार, कुशल कालीगढ, कुशल खेलाडी तथा श्रेष्ठ विद्वान् हुन्छ। यस्तो व्यक्ति धर्मको सम्बन्धमा कट्टर हुँदैन बरु जीवनको प्रत्येक क्षेत्रमा उदारताका साथ प्रस्तुत हुन्छ। वास्तवमा यस्तो व्यक्ति नै आफ्नो कार्यबाट समाजलाई केही योगदान दिन सफल हुन्छ।

**३. चुच्चो औंला–**

यी औंलाहरूले मानवका सुन्दर विचार तथा सुन्दर कार्यहरूतर्फ इंगित गर्दछन्। यस्तो व्यक्तिले जे कार्य पनि बेग्लै प्रकारले गर्दछ र कार्यमा एउटा विशेष प्रकारको व्यवस्था हुन्छ। यस्तो पनि देखिएको छ कि यस्तो व्यक्तिको जीवनमा उतार-चढाव बराबर आइरहन्छ। कहिले प्रसन्नताको चरम सीमामा यस्तो व्यक्ति हुन्छ भने कहिले यस्तो व्यक्तिको जीवनमा धेरै निराशा छाउँछ। यस्तो व्यक्तिको वैवाहिक जीवन अधिकतर असफल नै हुन्छ।

औंलाहरूको अगाडिका भाग अधिक तीखो हुनु अनुकूल मानिन्न। यस्तो व्यक्तिमा आत्मविश्वास कम हुन्छ। यस्तो व्यक्ति आफ्नो भावनाअनुसार नै चल्छ। यस्तो व्यक्ति अल्छी, कामुक र असक्षम मानिन्छ। यस्तो व्यक्तिले गोप्यता राख्न सक्दैन।

**४. वर्गाकार औंला–**

जुन व्यक्तिको हातमा वर्गाकार औंला हुन्छ त्यो व्यक्ति जीवनमा दूरदर्शी तथा नियमितताका साथ कार्य गर्ने हुन्छ। व्यापारी वर्ग प्राय:जसो यस्ता व्यक्तिमा आउँछन् जसले प्रत्येक कार्यको योजना धेरै सोचविचार गरेर मात्र गर्दछन्। यस्तो व्यक्ति हदैसम्म सतर्क भएर कदम बढाउने हुन्छ तथा कार्यमा एउटा नियमितता हुन्छ। यस्तो व्यक्ति स्वयं पनि पूरा परिश्रम गर्दछ र अरुबाट पनि काम लिने युक्ति जान्दछ। स्वच्छता, समयानुकूलता, वचनको परिपालन, आत्मविश्वास आदि गुण यस्तो व्यक्तिमा विशेषरूपमा पाइन्छ। यस्तो व्यक्ति राम्रो गणितज्ञ, इतिहासज्ञ तथा कवि हुन्छ। यस्तो व्यक्तिले नै जीवनमा विशेष सफलता प्राप्त गर्न सक्दछ। क्रमश:

(सिद्धाश्रम शक्ति केन्द्रसँग आबद्ध भएर परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, अनुकम्पास्वरूप साधक साधिकालगायत अन्य महानुभावहरूले आफ्ना जीवनमा पाउनुभएका विविध प्रकार र प्रकृतिका अनुभव/अनुभूतिहरू यस पत्रिकामा स्थायी स्तम्भअन्तर्गत प्रकाशित हुँदै आइरहेका छन्। सिद्धाश्रम शक्ति केन्द्रसँग जोडिएपछि यहाँहरूले सङ्गाल्ने सौभाग्य पाउनुभएको खण्डमा ती अनुभव/अनुभूतिहरूलाई पनि यस पत्रिकामा प्रकाशनार्थ उपलब्ध गराउन सक्नुहुनेछ, स्वीकृत भएमा मात्र छापिनेछ।)

# सिंगापुर यात्रा यसरी सम्पन्न भयो

२०६४ साल कार्तिक महिनाको अन्तिम सातातिरको कुरा हो । म समुद्रपारीको देश सिंगापुर जानुपर्ने थियो । यस यात्राका लागि करिब साढे एक लाख रुपैँयाको आवश्यकता थियो। तर आफ्नो साथमा भने दस हजारभन्दा बढी रकम थिएन । कहाँबाट रूपैँयाको बन्दोबस्त गर्ने भन्ने चिन्ताले सताएको थियो। पैसाको लागि यताउता धाउने प्रयास भने जारी थियो, सफलता भने प्राप्त भइरहेको थिएन ।

यसैबीच, मेरो माइला दाज्यूको वित्तीय संस्थाबाट आफ्नो धनकुटामा रहेको जग्गा धितो राखेर भए पनि पैसा झिक्ने निर्णय भयो । निर्णयअनुसार कुराकानी हुँदा ऋण दिने कुरा भयो । प्रक्रियागतरूपमा अपनाउनु पर्ने कागजी कार्यवाही अगाडि बढाइसकेपछि संस्थाले उपत्यकाबाहिरको सम्पत्तिमा लगानी नगर्ने बताएर ऋण अस्वीकृत गरिदियो । संस्थाको यो निर्णय मेरो लागि अप्रिय थियो तर अर्को दृष्टिबाट यो निर्णय मेरो पक्षमा नै भए जस्तो लाग्यो किनभने मैले पैतृक सम्पत्ति धितोमा राखेर ऋण लिन चाहिरहेको थिइन । अन्य कुनै उपायबाट रकम जम्मा गर्न सकियोस् भनेर मैले सद्‌गुरुदेवहरूसँग प्रार्थना भने जारी राखेको थिएँ ।

यसै क्रममा २०६४ साल कार्तिक महिनाको अन्तिम सातातिर माइला दाज्यूको फोन आयो । फोनमा उहाँले भन्नुभयो– 'तँलाई चिठ्ठा परेको छ, लिन आइज ।' चिठ्ठा परेको कुरामा मलाई विश्वास भने लागेन किनभने चिठ्ठा इत्यादि कुरामा मलाई रत्तिभर विश्वास थिएन । फेरि मैले त्यस्तो कुनै चिठ्ठा पनि किनेको थिइन । तैपनि दाज्यूसँगै भेटेर कुरा गर्दा वास्तविकता पत्ता लाग्ने ठहऱ्याई उहाँलाई भेट्न गएँ । भेटमा वास्तविकता उजागर भएपछि पो चकित परेँ ।

करिब बाह्र वर्ष पहिले काठमाडौँको जोरपाटीमा रहेको जग्गा धितोमा राखेर मैले बैङ्कबाट ऋण लिएको थिएँ । उक्त ऋणबाट मैले फ्याक्ट्री संचालन गरेको थिएँ । समयमा ऋण तिर्न नसक्दा उक्त जग्गा बैङ्कलाई नै छोडिदिएको थिएँ । बैङ्कबाट अन्तिम अवसरको रूपमा जग्गा निखन्न पत्राचार भएको रहेछ । दाज्यूले बैङ्कमा गएर सबै कुरा बुझ्ने सल्लाह दिनुभयो । उहाँले सान्त्वनाको लवजमा भन्नुभयो– 'अहिले जग्गाको मूल्य बढेको छ, बैङ्कलाई तिर्नु पर्ने सावाँ-ब्याज तिरेर पनि रकम बचन सक्दछ, उक्त रकम तिमीलाई सिंगापुर जानका लागि पुग्न पनि सक्छ ।' दाज्यूको यस्तो सान्त्वनायुक्त विचारले पनि मेरो मनमा भने शंका नै थियो कि मलाई बैङ्कको तिरम-तारम गरेर पनि उल्टो हातमा केही रकम आउनेछ । म बैङ्कमा मन नलागी-नलागीकन गएँ ।

बैङ्कले जग्गा फुकुवाका लागि ब्याजमा समेत भारी छुट दिने व्यवस्था रहेको बतायो । आफूसँग जग्गा फुकुवाको लागि आवश्यक रकम नभएको हुनाले बैङ्कसँग अनुरोध गरी एक महिनाको समय मागेँ । उक्त एक महिनाभित्रमा मैले जग्गा बेच्न सकुँला भन्ने विश्वास पलाएको थियो । मैले मध्यस्थकर्ता (जग्गा बेचविखनसम्बन्धी कार्य गर्ने) हरूलाई परिचालन गरेर जग्गा किन्ने मानिस खोज्न लगाएँ । अन्तमा मेरै सँधियारले नै उक्त जग्गा उचित मूल्यमा किन्न मञ्जुर गर्नुभयो । मैले कल्पना नै नगरेको प्रक्रियाबाट, माया मारिसकेको जग्गा बिक्री भएर बैङ्कलाई तिर्नुपर्ने रकम तिरेर पनि आफ्नो हातमा परेको रकमबाट सिंगापुरको यात्रामा जान सकेँ । आखिर परमपूज्य सद्‌गुरुदेवहरूले मेरो पुकार सुनिदिनु भयो । परमपूज्य सद्‌गुरुदेवहरूको अपार कृपा, अनुकम्पा र आशीर्वादले गर्दा मेरो ब्ल्याक लिष्टबाट नाम हट्यो भने मैले आफ्नो पैतृक सम्पत्तिलाई पनि धितो राखेर ऋण लिन परेन र सम्पत्तिलाई जोगाउन सकेँ ।

विदेश यात्राका लागि चाहिने अर्थको व्यवस्थापन यसरी गरिदिनु हुने परमपूज्य तथा परमआराध्य सद्‌गुरुदेवहरूको चरणकमलमा जति नै शिर नुहाए पनि कम नै हुन्छ, उहाँहरूको कृपा, आशीर्वादप्रति नतमस्तक हुँदै उहाँहरूको चरणकमलमा सधैँ समर्पित भइरहन सकियोस् र उहाँहरूको युग निर्माणको महान् योजनामा आफूलाई तन, मन, धनले लगाउन सकियोस्, यस्तो आर्तपुकार गर्दछु ।

जय गुरुदेव !

**–उमेश हिङमाङ**
**तीनकुने आरती संचालन केन्द्र**
**काठमाडौँ ।**

# पितृहरूसंगको दर्शन भेट

**आत्मीय पाठकवृन्द, धेरै पाठकहरूको विशेष अनुरोधमा हामीले 'डायरी' स्तम्भलाई पुनः प्रकाशित गरेका छौँ। कोरा सैद्धान्तिक व्याख्याभन्दा प्रयोगात्मकरूपमा एकजना साधकले भोगेका अनुभवहरूलाई यहाँ जस्ताको तस्तै उतारिएको छ। यसको मौलिकतालाई कायम राख्दै साधकको व्यक्तिगत पृष्ठभूमि एवं परिचयलाई भन्दा रोचक एवं आवश्यक प्रसङ्गहरूलाई मात्र यसमा समावेश गरिएको छ। यसका बाँकी अंशहरूलाई धारावाहिकरूपमा क्रमशः प्रस्तुत गर्दै लगिनेछ।**

...के थिएँ सूक्ष्म संकेत प्राप्त भयो। जसमा पितृलोकको बारेमा केही टिप्पणी तथा जानकारीहरू उल्लिखित थिए। पितृलोक नै यति विराट् रहेछ कि जहाँ सम्पूर्ण कुरा छन् जस्तो लाग्यो– तलदेखि माथिसम्म। समस्त ब्रह्माण्डमा पितृलोकको आफ्नै छुट्टै किसिमको पहिचान रहेछ। पितृलोकको श्राप पर्‍यो भने देवलोक पनि कमजोर हुने रहेछ। कारण के भन्दा पितृलोकको कारणबाट मनुष्यलोकमा फाइदा तथा उन्नति हुने रहेछ। मनुष्यलोकको ऊर्जाको कारणबाट देवलोकको अस्तित्व रहने रहेछ। यस्तै अन्य लोकसँग पनि पितृलोकको सम्बन्ध हुने रहेछ। यस रूपबाट हेर्दा पितृलोकबाट धेरै राम्रो हुने भएकोले नै मलाई योगीज्यूले कृपा गरी यहाँ पठाउनु भयो। नत्र भने मलाई त केही पनि थाहा थिएन।

पितृलोकको वृत्तान्त कसरी शुरु गरुँ, कसरी अगाडि बढाउँ र कसरी अन्त गरुँ? म सारै असमञ्जसमा परिरहेछु। सबै कुरा उल्लेख गर्न मन लाग्छ तर उल्लेख गर्नको लागि, बुझाउनको लागि मसँग शब्द नै हुँदैन। अनि त्यतिबेला म अति दुःखित हुन्छु। राम्रो संस्कारवाला माथि-माथि रहन पाउने हुँदा रहेछन्। त्यसैगरी, सुविधा पनि राम्रो हुने रहेछ। संस्कार नभएकाहरू तल-तल रहनुपर्ने हुँदोरहेछ। त्यहीअनुसार सुविधा पनि हुँदो रहेनछ। पितृलोक भनेर के गर्नु कुनै ठाउँ यस्तो रमणीय छ जसको व्याख्या गर्न सकिँदैन। त्यस्तै कुनै ठाउँ यस्तो गएगुज्रेको छ जसको नीच शब्दमा भन्नुपर्दा व्याख्या गर्ने शब्द नै छैन। यति नाजुक अवस्था हुनेरहेछ कि त्यहाँको अवस्था हेरेर दया गर्न थाल्यो भने त्यो व्यक्ति स्वयं त्यहीँ पुरिन्छ र ऊ पनि त्यस्तै बन्छ। फेरि ऊ स्वयं माथि आउन सक्दैन र उसलाई फेरि माथि आउन हजारौँ वर्ष लाग्न सक्छ।

पितृलोक यस्तो भरपर्दो ठाउँ रहेछ जसको माध्यमबाट सम्पूर्ण ऋषिमुनि, देवदेवी, गुरु आदि सम्पूर्णसँग सम्बन्ध कायम गरी अगाडि बढ्न सम्भव रहेछ। त्यसकारण पनि पितृलोकको महिमा गाइएको रहेछ। त्यसैले त समाजमा अहिले पनि केही उक्तिहरू पाइन्छन्। जस्तै, 'देवताले भरण गरेको (दिएको) कुरा पितृले हरण (हटाइदिनु) गरिदिन सक्छन्।' यही आधारमा पितृलाई मान्ने प्रथाको शुरुआत भएको हुनुपर्छ भन्ने मेरो मान्यता छ। पितृलाई मान्दा वा सम्मान गर्दा के फाइदा छ, नमान्दा वा अपमान गर्दा के बेफाइदा छ भन्ने कुरा मैले बल्ल बुझेँ।

कुनै पितृलोक (पितृलोकभित्रको उपलोक) यति नाजुक अवस्थामा पाइयो कि जहाँका पितृहरूले हजारौँ वर्ष बितिसक्दा पनि एक अञ्जुली पानी पिउन नपाएको घटना आत्मिकरूपमा अवगत हुन आयो। हुन त पानी चढाएर पितृहरूले त्यो कसरी पाउन सक्छन् भन्ने लाग्न सक्छ, दिएका कुरा कसरी खान सक्छन् भन्ने तर्क आउन सक्छ। तर्क आउनु र नआउनुको संसारभन्दा अत्यन्त बलवान् प्रकृति रहेछ जसले साराका सारा रहस्यहरूलाई आफूमा समाहित गरी छिपाएर राखिरहेको छ, पालिरहेको छ, हुर्काइरहेको छ। जुन पितृहरू नाजुक अवस्थामा छन् तिनीहरूकै शाखा-सन्तानबाट यस्ता तर्क र प्रवृत्ति निस्कने रहेछन् जसको कारणवश सधैँभरि सुख्खा भएर बसिरहन पर्ने रहेछ। उनीहरूलाई तार्न (माथि तान्न) को लागि एउटा न एउटा व्यक्ति जन्मिएर राम्रो संस्कार प्राप्त गरेपछि मात्र सम्भव हुनेरहेछ। होइन भने पितृ राम्रा छैनन् भने जति नै मेहनत गरे पनि, तपस्या गरे पनि, ती दरिद्रस्वरूप पितृले माथि पुग्न नै दिने रहेनछन्। एकपटक पितृलाई पानी चढाउँदा हजारौँ पितृलाई राहत पुग्ने रहेछ। र उनीहरू आफू माथि आउन पाएको खुशियालीमा मद्दत गरिदिने रहेछन् र व्यक्तिले आफूलाई केही मद्दत भएको अनुभव गर्ने रहेछ।

हामीले कहिले पनि खोतल्ने चेष्टा गरेनौँ। के कारणले मान्छेहरू आत्महत्या गर्छन्? के कारण घरमा अशान्ति हुन्छ, मनमा डाहा छटपटी हुन्छ? यी सम्पूर्णको पछाडि केही न केही कारण अवश्य हुन्छ। धेरै-थोरै अन्यकारण पनि हुन सक्छन् तर अधिकांशत मनुष्य जीवन सफल र असफल हुनुमा पितृलोकको कारण नै हुनेरहेछ। त्यसैले शास्त्रमा 'पितृदेवो भव' भनिएको रहेछ। वास्तवमा यो भनाइ शतप्रतिशत ध्रुवसत्य छ। जसले पितृलाई मान्दैनन्, ढिलो चाँडो दुःख, कष्ट, बाधा, अड्चन आउने नै रहेछ। पितृ खुशी हुनासाथ मनुष्य जातिमा पनि खुशी छाउने रहेछ, दुःखी हुँदा दुःखले घेर्ने रहेछ। सन्तान सुख हुनु र नहुनुमा पनि यही कारण हुने रहेछ।

कुनै तहका पितृले जीवनकालमा (मनुष्य जीवन छँदा) संस्कारवान् कार्य केही पनि गरेका छैनन् भने मृत्युपश्चात् उनीहरूको सूक्ष्मशरीर त्यही तहमा गएर रहँदोरहेछ। उसको छोरा-नातीले गरेको पुण्यकर्मको आधारमा क्रमिकरूपमा माथि आउँदोरहेछ। यदि छोरा, नाती, पनाती आदि कुनै पनि पुस्ताले त्यस्ता प्रकारका क्रिया-कर्मादिमा भाग लिएनन् भने ती पितृहरूले दुःख पाउँदा रहेछन् र त्यस्ता प्रकारका दुःख पर्नासाथ तिनीहरूले (पितृहरू) आफ्ना छोरा, नातीहरूलाई पिर्दा (दुःख दिँदा) रहेछन्। त्यसरी पिर्दा ती सपनामा यदाकदा (आक्कल-झुक्कल) देखिँदा रहेछन्। त्यतिबेला ती पितृहरूमा देह (सूक्ष्म शरीर) सुख्खा हुँदोरहेछ। पानी प्यास (तीर्खा)

लाग्ने रहेछ ।

त्यहाँ कसैले कसैलाई मद्दत गर्न नमिल्ने अवस्था हुँदोरहेछ । एक किसिमले भन्ने हो भने पश्चात्ताप गर्ने लोक पनि रहेछ । त्यसरी सपनामा पितृहरू देखा परे भने पितृको नाममा पानी तर्पण दिँदा (चढाउँदा) उक्त पितृको सूक्ष्म शरीरले त्यो प्राप्त गर्दोरहेछ अर्थात् सूक्ष्म शरीर स्वयंले उक्त जल (पानी) लिएर सन्तुष्ट हुने रहेछ । त्यसपछि पितृ केही हदसम्म सन्तुष्ट हुने रहेछ र सपनामा देखिन छाड्दो रहेछ । समाजमा यस्ता घटना घटिरहन्छन् तर हामी याद गर्दैनौं । पितृले पिर्न (दु:ख) दिन थाल्यो भने सधैं घर-परिवारमा आनन्द, शान्ति नमिल्ने रहेछ । घर-परिवारमा झैझगडा भइरहने रहेछ । एउटा न एउटा रोग लागिरहने रहेछ । पितृ खुशी हुनासाथ स्वत: नै सबै कुरा राम्रो भएर आउने रहेछ ।

पितृलोकमा एकदिनमा एक छाक खान पाउने व्यवस्था हुने रहेछ । त्यहाँको कतिपय कुरा बताउँदा यहाँहरूलाई अचम्म लाग्दछ । कुरा पत्याउन गाह्रो हुन्छ, कल्पनाका कुराजस्तो लाग्न सक्छ । वास्तवमा यो सत्य हो । कुनै पितृलाई हामीले वर्षको एकपटक श्राद्ध (श्रद्धा) गर्‍यौं भने त्यहाँको एकदिन हुनेरहेछ । यसरूपबाट भन्नुपर्दा वर्षदिनको अन्तरमा हामीले श्राद्ध गर्दा त्यहाँ दैनिकरूप नै हुँदै जाँदोरहेछ । कतिपय अवस्थामा यस्तो आपत्तिजनक र अपत्यारिलो हुने रहेछ कि हामीलाई वाहियात (काम नलाग्ने) कुराजस्तो लाग्न सक्छ तर पनि ती कुराहरू लागू भइरहेका हुन्छन् । कुनै कुनै पितृ मरेको अर्थात् मनुष्य जीवन त्याग गरेको एक वर्ष (वर्ष दिन) वा दुई वर्ष पितृलोकमा बस्नासाथ मनुष्यदेह धारण गर्न पाउने हुँदा रहेछन् र जन्म लिएर आइसकेका हुँदा रहेछन् । त्यहाँ उक्त पितृ त हुँदैन तर उसको छोराले नित्य पानी चढाएको हुन्छ, स्मरण गरिरहेको हुन्छ । तर अचम्मको कुरा के भने छोराले पितृको नाममा पानी चढाउँछ, ठीक त्यसै समयमा पृथ्वीतटमा जन्मिसकेको पितृ (बाबु) चाहिँलाई पानी पिउन मन लाग्छ र पिउँछ । छोराले चढाउने र बाबुले पिउने समय ठ्याक्कै हिसाब गर्दा मिल्न जान्छ ।

मनुष्य जीवन र पितृलोकको जीवनमा केही अन्तर छ, स्थूल र सूक्ष्ममा केही भेद छन् । अर्को कुराचाहिँ पितृलोकको रंग सेतो आवरणभित्र रहेछ त्यसकारण पितृहरू सेतो रंगमा नै रमाउने हुँदा रहेछन् । यस प्रकारको भेदले पनि कोही मान्छे मर्‍यो भने उसको बरखी बार्दा सेतो पहिरनमा रहने चलन बसेको हो । यसो गर्दा पितृहरूलाई धेरै नै सजिलो हुने रहेछ । आफ्ना छोरा, नाति राम्रा हुँदा उनीहरूलाई पनि राम्रो हुने रहेछ । पितृलोकको प्रभावबाट सत्मार्ग गुरुमार्गमा लाग्नलाई धेरै टेवा पुग्ने रहेछ । अर्को रूपमा भन्नुपर्दा पृथ्वीलोक (मनुष्यलोक) मा रहँदा राम्रो कर्म र नराम्रो कर्म गरे बापत भोग्ने ठाउँ नै पितृलोक रहेछ । भोग्ने भोगाइ सकिएपछि मनुष्य देहमा जन्म लिन पाउने रहेछ ।

कोही पितृ जो माथिल्लो थन्का (तह) का हुन्छन्, पितृलोकबाट मनुष्य देह धारण नगरी देव/देवी लोकमा पनि जान पाउने हुँदा रहेछन् । यस्तो हुनुमा जो आफू मनुष्य छँदा नै देव/देवीलाई प्राप्त गर्ने र केही सिद्धि, शक्ति प्राप्त गरिसकेका छन् तिनीहरू मात्र देवलोकमा रूपान्तर हुन सक्दा रहेछन् । सूक्ष्मताको आधारबाट भन्नु पर्दा पितृलोकको माध्यमबाट जुनसुकै लोकमा जानको लागि तालमेल मिलाउन सकिन्छ । पितृलोकको बारेमा वृत्तान्त कुराहरू समेटिएको जुन संकेत प्राप्त भयो वास्तवमा त्यो नै मेरो लागि ठूलो सौभाग्य थियो, जसको कारण मैले यत्तिका ज्ञान हासिल गर्ने मौका पाएँ । प्रत्येक पितृको अलग-अलग रंग भएता पनि बाहिरी आवरणमा सेतो रंग नै प्रमुख रहेछ । म जब माथि जाँदै थिएँ अचम्मको ठाउँ आइपुग्यो । अत्यन्त मनमोहक ठाउँ रहेछ । सुविधाले भरपूर क्षेत्र थियो । रमणीय बगैँचाहरू थिए । तर त्यहाँ नै जान नमिल्ने रहेछ । हेरेर आनन्द लिने रहेछ । फूलहरू (वनस्पति) यति धेरै रङ्का थिए कि कतिपय रंग पृथ्वीतटमा पाइँदैन । पितृहरूले बगैँचाको तर्फबाट पनि आफूलाई शक्तिसम्पन्न बनाउँदा रहेछन् । कतिपय रंगका फूलहरूले यति धेरै शक्ति प्रदान गर्दा रहेछन् जुन हजारौं वर्षको तपस्याबाट पनि त्यति शक्ति प्राप्त गर्न सकिँदैन । जति माथिल्लो तहका पितृ भए, त्यस्ता प्रकारका शक्ति आर्जन गर्ने माध्यम हुँदोरहेछ । तर तल-तलका पितृहरूको लागि यस्तो अवसर दुर्लभ नै हुने रहेछ । पितृहरूले चाहँदैमा यस्तो दुर्लभ एवम् दिव्य फूल (वनस्पति) को दर्शन गर्न नपाइने रहेछ । आफूखुशी कसैले केही गर्न नपाइने रहेछ । प्रत्येक ठाउँमा नियम पूरा गरेर मात्र त्यस क्षेत्रमा प्रवेश गर्न पाउँदा रहेछन् । प्रत्येक ठाउँमा नियमको पालना पूर्णरूपले गर्नुपर्ने हुँदो रहेछ । तर मलाई अचम्म लागिरहेको छ कि यस्तो दिव्य ठाउँको दर्शन गर्ने, ज्ञान हासिल गर्ने दिव्य अवसर मैले सजिलै पाइरहेको छु । शायद गुरुकृपा होला । कहिलेकाहीं यस्तो लाग्छ कि मैले केही गरेकै छैन । तपस्या पनि गरेकै छैन जस्तो लाग्छ तर पनि मलाई किन यतिविघ्न (धेरै) अवसर प्राप्त भएका छन् । म तुच्छ प्राणीको लागि परमपूज्य गुरुदेवले यति कृपा गर्नुभएको छ । मलाई असङ्ख्य गुरु ऋण लागेको छ । मैले कसरी गुरु ऋण चुक्ता गर्ने होला भन्ने भावले आत्मामा पनि डाहा र छट्पटी हुन्छ । कहिलेकाहीं असीम गुरुकृपा बर्सिएको कारण आत्मशरीर हर्षको पराकाष्ठामा पुग्दोरहेछ । त्यतिबेला आत्मा अखण्डरूपबाट रुने रहेछ । गुरुको याद गर्दा साथ रुने रहेछ । यस्तो अवस्थामा पुगेको आत्माले सम्पूर्ण कुरा बिर्सेर केवल गुरुलाई मात्र सम्झने रहेछ । केवल गुरु मात्र देख्ने रहेछ । सम्पूर्ण देवदेवीहरू गुरुभित्रबाट प्राप्त गर्दोरहेछ । पितृलोकमा आएर यो तहमा आएपछि मैले गुरुकृपाको बारेमा थाहा पाउने मौका पाएँ । हामीले खासैरूपमा केही नगर्दा पनि गुरुले कति हेरिरहनु भएको रहेछ भन्ने कुरा चाल पाएँ । गुरुदेवको कति उच्च सम्मान गर्दा रहेछन् पितृलोकमा । त्यो पनि उहाँको दिव्य दर्शनको लागि होइन । जाबो मजस्तो तुच्छ प्राणी जसले केही गरेको छैन, न त तपोधनी नै हुँ । केवल गुरुबाट दीक्षा लिएर उहाँको शिष्य मात्र बन्न पाएको हुँ । योग्य शिष्यको कुरै छाडौं, गुरुदेवको शिष्य (तुच्छ) लाई त यति धेरै सम्मान छ भने ... । उहाँको चरणको दर्शनको लागि त सम्पूर्ण पितृलोक नै झुक्न तयार छ जस्तो लाग्यो । जस्तोसुकै सम्मान दिन पनि पितृलोक तयार छजस्तो लाग्यो । मलाई कता-कता खल्लो महसुस भइरहेको छ । यस्ता व्यक्त गर्न नसक्ने परम् महाशक्तिस्वरूप, परम तेजस्वी, ब्रह्माण्डरूपी महान् व्यक्तित्व पृथ्वीतटमा पुग्दा पृथ्वीबासीको तर्फबाट खासै महत्त्व दिइएन, सम्मान गरिएन । साह्रै अपहेलना गरेजस्तो लाग्यो मलाई । हुन त कसैले सम्मान गरोस् भनेर गुरुदेव जानु भएको होइन तर पनि हामी शिष्य भनाउँदाहरूले पनि केही गर्न सकेनौं । मलाई आत्मग्लानी भइरहेको छ । बेचैनी भइरहेको छ । एउटा न एउटा निहुँ र बहानाले प्रत्येक शिष्य भागिरहेका छन्, कुदिरहेका छन् । ब्रह्माण्डमा प्रत्येक घटना गुरुको इच्छाबेगर घट्दो रहेनछ भन्ने गुरु रहस्य पनि मैले पितृलोकमा नै थाहा पाएँ । यहाँ गुरु प्राप्त गर्नु भनेको त दुर्लभ नै मानिँदो रहेछ । सद्गुरुको सान्निध्यता प्राप्त गर्ने कोही व्यक्तिको पितृलाई पनि यहाँ उच्च सम्मान गरिँदोरहेछ । अरुको त कुरा नै पर सारौं । अब यी कुराहरू यहीं नै छाडौं । मैले अर्को दिव्य अवसर प्राप्त गर्ने मौका पाएँ । मलाई जहाँ पुर्‍याइएको थियो, यस पितृलोकको जुन तह छ, यहाँ मेरो पितृदेव रहनुहुँदो रहेछ । मलाई उहाँको दर्शन एवं भेटवार्ताको लागि मौका प्राप्त भयो । मलाई साह्रै खुशी लाग्यो । त्यस ठाउँमा पुग्नु (जानु) भन्दा अगाडि मैले आत्मिकरूपमा मेरा आराध्य गुरुहरू परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं श्री श्री महायोगी गुरु गोरखनाथलाई स्मरण गरें । उहाँहरूले खुशीसाथ सूक्ष्म अनुमति प्रदान गर्दै भन्नुभयो– 'तँ त्यहाँ गएर त्यत्तिकै फर्किने होइन । तेरो पितृदेवले ऊसँग भएको विद्या तँलाई हस्तान्तरण गर्ने हेतुले यो आयोजना गरिएको छ । अब ऊ यहाँ धेरै रहँदैन । तैँले उक्त

विद्या राम्रो जतन गरी राख्नू । समय आएपछि हामी आदेश दिउँला, सोहीअनुसार गर्नू । तेरो पितृदेवलाई हामीले आश्वासन दिएका छौं । गुरु आदेशको अपहेलना नगर्नू ।' म हर्षले भावविभोर भएँ । कहिले त्यहाँ पुग्ने होला भनी आत्मामा आकुलता र व्याकुलता प्राप्त हुन आयो । त्यो ठाउँ यति टाढा रहेछ कि त्यहाँ जानको लागि विद्या प्रयोगबेगर सम्भव रहेनछ । मैले त्यही ठाउँमा बसेर पितृदेवलाई तीनपटक सम्झें । सजिलैसँग मैले उहाँ (पितृदेव) सँग आत्मिक सम्पर्क गर्न सफल भएँ । आत्मिक सम्पर्क (कनेक्सन) यति शीघ्र एवं सूक्ष्म रहेछ कि यसको तरङ्ग अत्यन्त चेतनायुक्त एवं दिव्यतम् हुने रहेछ । क्षणात् सिद्धि विद्याको सदुपयोगद्वारा म त्यहाँ पुग्ने प्रपञ्च रचियो (योजना तय भयो) । यो यति तीक्ष्ण विद्या हो कि सोच्नासाथ नै तोकेको ठाउँमा पुग्न सकिन्छ । तर त्यसको लागि तप शक्तिचाहिँ निकै नै जम्मा गर्नुपर्ने हुन्छ । जब म त्यहाँ पुगें मेरो पितृदेव जति बेला पनि त्यहीं हुनुहुन्छ होला, गएर प्रथमतः ढोग गर्नेछु (सम्मान गर्नेछु) भन्ने मेरो मनसाय पूरा भएन । उहाँ निश्चित समयमा मात्र त्यहाँ हुनुहुँदो रहेछ । अन्य समयमा उहाँ खै कता हुनुहुन्छ, पत्ता लाग्दो रहेनछ । म आफ्नो खोजाइ र रोजाइको ठाउँमा पुगें जस्तो लाग्यो । यद्यपि उहाँसँग भेट गर्नको लागि मैले केही समय प्रतीक्षा गर्नुपर्ने भयो । म आफ्नै खुशीमा रमाइरहेको थिएँ । त्यहाँ एकछिन बिताएँ होला भन्दा पनि स्थूलतामा धेरै समय बितिसकेको हुनेरहेछ । अकस्मात् त्यहाँको वातावरणमा एकप्रकारको रौनक (उत्साह) आयो । उहाँ (पितृदेव) आउने कुरा मलाई स्वतः ज्ञात हुन आयो । उहाँ स्वयं म भएतिर आइरहनु भएको थियो । म लम्पसार परेर ढोग्न लागेको थिए । उहाँले अस्वीकार गर्दै भन्नुभयो, 'तिम्रो शिरमा गुरुहरू विराजमान हुनुहुन्छ । तिमीले भावमा आएर मेरो चरणमा ढोग्दा गुरुहरूलाई अपहेलना गरेको जस्तो हुन जान्छ । त्यसकारण आत्मिकरूपमा नमन गर्नू ।' म अवाक् भएँ किनकि मेरो पितृदेवको कृपा, आशीर्वादले गर्दा यस्ता महानतम् गुरुसमक्ष पुग्ने मौका पाएँ, जोडिने मौका पाएँ । आज यस क्षणमा बल्ल-बल्ल उहाँलाई पाउँदा पनि ढोग गर्न नपाउँदा बडो नमज्जा (खल्लो) लाग्यो । मैले मेरा आराध्य गुरुहरूसँग पुनः प्रार्थना गरें र ढोग्नको लागि अनुमति मागें । परमपूज्य गुरुदेवले पितृदेवको घुँडामा ढोग्न पाउने अनुमति दिनुभयो म हर्षले गद्गद् भएँ । यो प्रथमपटक हो गुरुदेवले मेरो इच्छालाई सदर गरिदिनु भएको । उहाँ कति शिष्यवत्सल हुनुहुँदो रहेछ भन्ने कुरा मैले यस क्षणमा अनुभव गर्न पाएँ ।

परमपूज्य गुरुदेवको आदेश पाएपछि मैले पितृदेवसमक्ष पुगी ढोग गरें, मलाई आनन्द आइरहेको थियो । उहाँले मलाई आशीर्वादसहित धाप मार्दै भन्नुभयो कि 'मसँग भएका विद्या अब तिमीले नै चलाउनू तर यति वर्षको भएपछि मात्र ।' यहाँ म उक्त वर्ष खुलाउन असमर्थ छु किनकि सूक्ष्म शरीरको समय र स्थूल शरीरको समयमा हिसाब गर्दा कहिलेकाहीँ ठ्याक्कै भन्न नसकिने अवस्था हुँदोरहेछ । त्यसपछि हामी (म र पितृदेव) अर्कै कक्षा (कोठाजस्तो) मा गयौं । त्यो कोठा अचम्मलाग्दो थियो । केही पनि थिएन तर त्यहाँ सम्पूर्ण चीजबीजले भरिभराउ भएकोजस्तो आभास हुन्थ्यो । त्यहाँ हामी दुईजना मात्र थियौं । तर त्यहाँ कैयौं अन्य व्यक्तित्वहरू पनि हुनुहुन्छ भन्ने आभास भयो मलाई । मलाई एक क्षण ध्यान गर्नको लागि पितृदेवले निर्देश गर्नुभयो । म ध्यानमग्न भएँ । अचम्मको कुरा के भने उक्त एक क्षणको ध्यानमा मैले यति धेरै कुरा सिक्ने र बुझ्ने मौका पाएँ कि त्यसबारेमा भन्ने हो भने, लेख्दै जाने हो भने स्थूलतामा महिनौं दिन लाग्छ होला । कारण के भने त्यहाँको एक क्षणमा स्थूलताको धेरै समय नै बितिसकेको हुने रहेछ । कुनै विषयवस्तु यस्ता थिए कि त्यहाँ एक झलक (पल्ट) मात्र हेरेको हो तर त्यसबाट उब्जिएका कैयौं प्रश्नहरू एवं प्रत्येक प्रश्नको भित्रबाट उब्जिएका (जन्मेका) जिज्ञासा अनि त्यसको समाधानका पक्षहरू, साथै प्रत्येक विषयवस्तुले जीव एवं जगत्मा पार्ने प्रभावहरू, त्यसैगरी भविष्यमा जन्मन सक्ने सम्भावनाहरू एवं चुनौतीहरू, यी सम्पूर्णको ज्ञान एकैसाथ प्राप्त हुने रहेछ । जसरी कुनै संयन्त्रले प्रकृतिका दृश्यहरू एकसाथ प्राप्त गरेर संप्रेषण गर्दछ, ठीक त्यसभन्दा पनि अगाडि रहेर आत्मशरीरले मौका पाउनासाथ हतारका साथ सम्पूर्ण विद्या एवं ज्ञान एकसाथ प्राप्त गर्न खोज्दो रहेछ । तर त्यहाँ आत्माको क्षमताको आधारमा धेरै र थोरै प्राप्त गर्ने रहेछ । शक्तिशाली आत्माले एक क्षणमा पनि धेरै विद्या एवं ज्ञान प्राप्त गर्न सक्षम हुँदोरहेछ । त्यसैगरी कम शक्तिशाली आत्माले अलि कम विद्या एवं ज्ञान हासिल गर्ने रहेछ । आत्मामा छिपेर रहेको संस्कारदोष, घमण्ड, अहंकार, आदिले विद्या प्राप्तिमा साह्रै नै असर पार्ने रहेछ । त्यसैले, आत्म शरीरले आफ्नो स्थूल शरीरलाई सदैव भाव दिएर संगत शुद्धि प्रदान गरेर सत्चिन्तन गराएर आत्मिक ऊर्जालाई वृद्धि गराउने रहेछ । आत्माले आफ्नो उद्देश्य, लक्ष्य पूरा गराउन शरीर धारण गर्ने रहेछ । यसरी शरीर धारण गर्ने क्रममा कहिले मनुष्य शरीर, कहिले देव शरीर आदि आदि प्राप्त गरी अगाडि बढ्ने रहेछ । आत्मशरीरले अनेकौं कला, उपकला जानेको रहेछ । जहाँ जुन कुराको आवश्यकता पर्दछ त्यहीअनुसार अगाडि बढ्ने रहेछ ।

मलाई अचम्म लागिरहेको छ यस विशाल ब्रह्माण्डभित्र ज्ञानका भण्डार कति रहेछन् भनेर । कहिलेकाहीं त सिकेर नै सकिँदैन कि जस्तो लाग्दछ । आत्मशरीरले त्यस कोठा (पितृदेवले लगेर बसाउनुभएको कोठा) मा एक क्षण ध्यानमग्न हुनासाथ नै मैले प्राप्त गरेका उपलब्धिहरूमध्ये एउटा विषय म यहाँ प्रष्ट्याउन गइरहेको छु । जब म ध्यानमा गएँ म स्वयं नै त्यहाँबाट उडेर कतै गइरहेको जस्तो लाग्यो । म जस्तो हुन्छ त्यसलाई नै पिछा गर्दै गएँ । जाँदाजाँदा प्याजी रंगको प्रकाश देखा पर्न थाल्यो । त्यसपछि अनेकौं खालका दृश्यहरू देखा पर्न थाले । यी विविध प्रक्रिया हुँदै थिए, मेरो आत्मशरीरलाई पितृदेवले स्पर्श गर्नुभएको जस्तो अनुभव भयो । त्यसपछि मलाई अप्रत्याशितरूपमा करेन्टको झट्का महसुस भयो । म तानिँदै गएँ । उहाँ जानुभएको दिशातर्फ एकसाथ सँगसँगै जान म समर्थ भएँ ।

मलाई अचम्मको आनन्द प्राप्त भइरहेको थियो । मभित्रबाट यति धेरै श्रद्धाभाव वृद्धि भएर आयो कि जसको बारेमा म यहाँ व्याख्या गर्न असमर्थ छु । जाँदा-जाँदा एउटा सूर्यजस्तो चम्किलो एवं प्रकाशले भरपूर चक्र देखापर्‍यो । उक्त चक्रभित्र हामी (पितृदेव र म) सजिलै छिर्न (प्रवेश गर्न) सफल भयौं । त्यसपछि त यस्तो रमणीय संसार आइपुग्यो कि त्यहाँको बारेमा कसरी व्याख्या गरूँ म । तर पनि म सम्भव भएसम्म उल्लेख गर्नेछु । यी व्याख्याहरूलाई केवल कल्पनाको दृष्टिबाटचाहिँ नहेरियोस्, नबुझियोस्; केवल आत्माको अनुभवको रूपमा बुझियोस् भन्ने चाहन्छु । खुल्ला आकाश गंगामा स्वतः नै विभिन्न खालका ध्वनि गुञ्जित थिएँ । विभिन्न खालका सङ्केतहरू स्वतः नै विचरण गरिरहेका थिए । जसरी नवग्रह र नक्षत्रहरूले परिक्रमा गर्दछन् त्यसैगरी ती दिव्य सङ्केतहरू आ-आफ्नै चरणमा विचरण गरिरहेका थिए । मात्र दर्शनले पनि असङ्ख्य शक्ति प्राप्त भइरहेको जस्तो लाग्यो । त्यो कुन लोक होला जहाँ हामी आइपुगेका छौं भन्ने विषयले मलाई कौतुहल जागेर आयो र श्रद्धापूर्वक पितृदेवसँग मैले क्षमा माग्दै आफ्नो जिज्ञासा प्रकट गरें । त्यसपछि उहाँ खुशी हुँदै मलाई उक्त नयाँ ठाउँको बारेमा व्याख्या गर्न लाग्नुभयो । 'यो ठाउँ वास्तवमा देवलोक नै हो, कुनै समयमा विशेष कारणले देवलोकबाट अलि पृथक् राखियो र यस ठाउँलाई पितृलोकका विशेष (महान्) आत्माहरूलाई केवल तपस्यामा लीन हुन (डुब्न) को लागि छुट्याइयो । जब पितृहरू देवलोकमा प्रवेश गर्नको लागि क्षमतावान् बन्दछन् त्यसपछि यस लोक (पितृ+देव=पितृदेव) बाट पितृलाई देवलोक पठाइँदो रहेछ र तिनीहरू (पितृहरू) देवलोक प्रवेश गर्दारहेछन् । देवलोक प्राप्तिपश्चात् पितृहरू त्यतैतिर रहँदा रहेछन् र देवलोकको भोग गर्दा रहेछन् ।' जब मैले यी कुरा थाहा पाएँ, यति धेरै खुशी लाग्यो कि जसलाई म यहाँ उल्लेख गर्न असमर्थ छु । त्यसपछि हामी एउटा अचम्मको...क्रमशः । जय गुरुदेव !

# आश्रम गतिविधि

## मासिक हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रले हरेक महिनाको पहिलो हप्तामा सञ्चालन गर्दै आईरहेको हवन कार्यक्रमहरू श्रावण महिनामा पनि भव्यरूपमा सम्पन्न गर्‍यो । हवन शृंखला अन्तर्गत श्रावण ६ गते पशुपति मृगस्थली स्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, श्रावण ७ गते ललितपुर लगनखेल स्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, श्रावण १ गते ललितपुर लगनखेल स्थित माता महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन, श्रावण २ गते पाटन कुम्भेश्वर स्थित माता बगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम सम्पन्न भयो । उपरोक्त हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम बिहान ७:०० बजेदेखि ८:०० बजेसम्म र अन्य हवन कार्यक्रमहरू बिहान ८:०० बजेदेखि ९:०० बजेसम्म सञ्चालन भएको थियो । १ घण्टासम्म सञ्चालन हुने उक्त हवन कार्यक्रमहरूमा सहभागी हुँदा सजिलै सद्‌गुरुदेवहरू र सम्बन्धित देवी देवताको कृपा, आशीर्वादको पात्र बन्न सकिने भएकाले सहभागी हुने भक्तजनको संख्या दिनानुदिन बढ्दो छ ।

## गुरू पूर्णिमा महोत्सव सम्पन्न

शिष्यहरूको लागि सबैभन्दा ठूलो पर्वको रूपमा रहेको आषाढ पूर्णिमाको दिन लाई सिद्धाश्रम शक्ति केन्द्रले गुरु पूर्णिमा महोत्सवको रूपमा गत श्रावण ३ गते शुक्रबार सम्पन्न गर्‍यो । गो.नि.ज्यो.दि.वि. प्रांगणमा भएको उक्त महोत्सव बिहान १०:१५ बजे शुभारम्भ भई दिउँसो ४:०० बजेसम्म सम्पन्न भएको थियो जसमा पहिलो चरणअन्तर्गत निखिल स्तवन, गोरक्ष स्तवनको सामूहिक पाठ, दिव्य गुरु पादुका पूजन, मन्त्रजप, हवन, सवालाख बत्ती प्रज्ज्वलन, गुरु आवाहन भजन, आरती सम्पन्न भएको थियो । आश्रमकै विभिन्न युनिट तथा व्यक्तिहरूले आ-आफ्नै तर्फबाट गरी जम्मा ६ वटा सवा लाख बत्ती अर्पण गरिएको थियो । उक्त कार्यक्रममा प्रसाद वितरणको अभिभारा वहन गर्दै साधक साधिकाहरू मधुमती रञ्जित, चञ्चला शर्मा, विमला प्याकुर्‍याल, लक्ष्मी तिवारी, युवराज बस्नेत, टेकबहादुर सुब्बा, सपना रेग्मी र सृजना सुब्बाले दिव्य गुरु पादुका पूजन गर्ने सौभाग्य प्राप्त गर्नुभएको थियो ।

दोस्रो चरणको शुभारम्भमा गुरुसेवा दल नं.७ का सदस्य साधक विशाल गौतमले संस्थाको तर्फबाट स्वागत मन्तव्य राख्नुभयो । दोस्रो चरणको अन्य कार्यक्रमअन्तर्गत भजन, कीर्तन, नृत्य, पुरस्कार वितरण, प्रवचन-स्ववचन आदि रहेका थिए । प्रवचनको क्रममा सावर पन्थी नं. २ का सदस्यले गुरु पूर्णिमाको महत्त्व र शिष्यहरूको दायित्व, श्रावण महिनाको महत्त्वमाथि प्रकाश पार्नुभएको थियो । प्रवचनकै क्रममा सावर पन्थी नं. १ का सदस्यले अध्यात्मसम्बन्धी विविध विषयमा बोल्नुभएको थियो भने सावर पद्धतिको विशेष मुद्रा सहितको ध्यानलाई प्रयोगात्मकरूपमा सम्पन्न गराउनुभएको थियो । कार्यक्रममा आरती सञ्चालन केन्द्र ठिमीको तर्फबाट देखाइएको तंत्र पद्धतिमा आधारित नृत्य विशेष आकर्षक रहेको थियो । पुरस्कार वितरणको क्रममा साधिका बुनु श्रेष्ठले गोरक्ष निखिल वाणीको ५० जना सदस्य बनाई विशेष शक्तियुक्त विशेष धारण माला तथा सद्‌गुरुदेवहरूको तस्वीर प्राप्त गर्नुभएको थियो । सावर पन्थी नं.३ का सदस्यज्यूले सञ्चालन गर्नुभएको उक्त कार्यक्रममा २५०० भन्दा बढी साधक-साधिका भक्तजनको सहभागिता रहेको थियो । गुरु पूर्णिमा महोत्सव कास्की, तनहुँ, चितवन, काभ्रेपलाञ्चोकलगायत विभिन्न जिल्लामा पनि विविध कार्यक्रमका साथ सम्पन्न भएको थियो ।

### सापद्रय रूस प्रस्थान

सिद्धाश्रम शक्ति केन्द्र नेपाल, सावर पन्थी सदस्य नं १ र २ ज्यूहरू गत श्रावण १७ गते रसिया प्रस्थान गर्नुभयो । आध्यात्मिक गतिविधिअन्तर्गत संस्थाको प्रतिनिधित्व गर्दै उहाँहरू रुस जानु भएको हो । उहाँहरूको यो भ्रमण उक्त देशका लागि तेस्रो हो ।

सापद्रयलाई त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा बिदाइ गर्न सावर पन्थी सदस्यज्यूहरू, गुरु सेवा दलका सदस्यहरूलगायत अन्य साधक साधिका जानुभएको थियो ।

## सम्पर्क कार्यालय गतिविधि

### भगवान् वेदव्यास हवनको शुभारम्भ

तनहुँ जिल्लामा भगवान् वेदव्यासको तान्त्रोक्त हवनको शुभारम्भ भएको छ । हरेक महिनाको पहिलो बिहीबार सम्पन्न हुने उक्त हवन श्रावण २ गते पहिलोपटक सम्पन्न भएको थियो । वेदव्यास गुफाको प्रांगणमा सम्पन्न भएको उक्त हवन बिहान ८:०० बजेदेखि ९:०० बजेसम्म सञ्चालन भएको थियो ।

### कीर्तिपुर र दोलखामा भजनकीर्तन

गत श्रावण ११ गते ललितपुर सम्पर्क कार्यालय र आरती संचालन केन्द्र कीर्तिपुरको संयुक्त आयोजनामा विष्णुदेवी मन्दिर, नैकापमा भजनकीर्तन, नृत्य तथा प्रचारात्मक कार्यक्रम सम्पन्न भयो ।

यसैगरी सिद्धाश्रम शक्ति केन्द्र, आरती केन्द्र दोलखाले श्रावण १६ गते स्थानीय भीमेश्वर मन्दिर प्रांगणमा भजनकीर्तन कार्यक्रमको आयोजना गर्‍यो । स्थापनाकालको पहिलो वर्ष पूरा भएको अवसरमा आयोजित उक्त कार्यक्रममा केन्द्रबाट पनि सहभागिता रहेको थियो ।

गुरु सेवा दलका सदस्य साधक सुन्दरराज आचार्यको अगुवाईमा भएको उक्त कार्यक्रमले समाजमा अत्यन्तै सकारात्मक छाप छोड्न सफल भएको जानकारीमा आएको छ ।

# आश्रम गतिविधि

## दिव्य गुरु महोत्सव

सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिनाको २१ तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउँदै आइरहेको क्रममा गत श्रावण ६ गते सोमबार (२१ जुलाई, २००८) का दिन स्थानीय गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको प्रांगणमा उक्त महोत्सव सम्पन्न गऱ्यो । बिहान १०:१५ बजे प्रार्थनाबाट शुभारम्भ भई दिउँसो ३:३० बजेसम्म चलेको उक्त कार्यक्रममा पहिलो चरणअन्तर्गत निखिल स्तवन, गोरक्ष स्तवनको सामूहिक पाठ, दिव्य गुरु पादुका पूजन, मन्त्रजप, हवन, गुरु आवाहन भजन, आरती सम्पन्न भयो । उक्त कार्यक्रममा दिव्य गुरु पादुका पूजन गर्ने सौभाग्य साधक जितेन्द्र कमाचार्य तथा साधिका अनु श्रेष्ठले प्राप्त गर्नुभएको थियो ।

दोस्रो चरणको शुभारम्भमा गुरुसेवा दल नं.९ का सदस्य साधक हरि भट्टराईले संस्थाको तर्फबाट स्वागत मन्तव्य राख्नुभएको थियो । कार्यक्रममा विद्याश्रमको तर्फबाट प्रस्तुत गरिएका नृत्यहरूमध्ये भजनमा आधुनिक नृत्य पनि भाइबहिनीहरूले देखाए भने ललितपुर सम्पर्क कार्यलयको तर्फबाट आधुनिक गीतमा आध्यात्मिक नृत्य प्रस्तुत गरिएको थियो । पोशाक वितरणको क्रममा गु.से.द. नं. ५३ का सदस्य साधक भोजराज रेग्मीलाई सा.प.द्वयहरूले हरियो पोशाक पहिऱ्याउनु भएको थियो । पुरस्कार वितरणको क्रममा गोरक्ष निखिल वाणीको सदस्यता बढाउने अभियानमा सहभागी भई २० जना पत्रिका सदस्य बनाई साधक अजितकुमार सापकोटा तथा साधिकाहरू सरिता शर्मा, सावित्री श्रेष्ठ र सानुमैयाँ श्रीवास्तवले विशेष धारण माला प्राप्त गर्नुभएको थियो । प्रवचनको क्रममा सावर पन्थी नं.२ का सदस्यज्यूले भगवान् शिव गोरक्षको महिमा, श्रावण महिनामा श्री शिव गोरक्षको आराधनाको महत्त्वको बारेमा बोल्नुभएको थियो । प्रवचनकै क्रममा सावर पन्थी नं.१ का सदस्यज्यूले श्री श्री महायोगी गुरु गोरखनाथको प्रकटीकरण प्रक्रियागत रहस्यहरूलाई उजागर गर्दै सद्गुरुदेवहरूको कृपाले श्रावण महिनाभरिका लागि विशेष प्रकारको मन्त्र लेखन साधना प्राप्त भएको जानकारी गराउँदै उक्त साधनाको विधि सिकाउनु भएको थियो । साथै लेख्न नजान्नेहरूको लागि विकल्पको रूपमा गोरक्ष सुरक्षा मन्त्र जप गर्न पाउने व्यवस्था प्राप्त भएको पनि जानकारी गराउनुभएको थियो ।

## कार्यकर्ता सहायक समूह क र ख को तालिम

गत श्रावण २० र २१ गते कार्यकर्ता सहायक समूह क र ख समूहको तालिम सम्पन्न भयो । सिद्धाश्रम शक्ति केन्द्रको नियमित मासिक तालिमअन्तर्गत सम्पन्न क समूहको तालिम सामाखुशीस्थित एबी पार्टी प्यालेसमा बिहान ६:०० बजेबाट संचालन भएको थियो भने बिहान ११:०० बजेदेखि समूह ख को तालिम शुभारम्भ भएको थियो । उक्त तालिममा विविध विषयमा प्रशिक्षण प्रदान गरिएको थियो । तालिममा दुवै समूहबाट गरी काठमाडौँ, भक्तपुर, ललितपुर, काभ्रेपलाञ्चोक, सिन्धुपाल्चोक, चितवन, गोरखा, तनहुँ, रूपन्देही, कास्की, लमजुङ, सुर्खेत, सर्लाही, बाग्लुङ, नुवाकोट, पाल्पा जिल्लाहरूबाट प्रशिक्षार्थीहरू सहभागी थिए ।

प्रशिक्षणमा क समूहबाट सुभद्रा श्रेष्ठ, निलकमल राई, गोमा सञ्जेल, नागेश कँडेल, शारदा पराजुली र समूह ख बाट सुमित्रा पौडेल, सान्नानी सिलवाल, मीना थापा, सुनिलनन्द बज्राचार्यले पहिलो दिन गुरु पादुकाको दिव्य पूजन गर्ने सौभाग्य पाउनुभएको थियो । तालिमको दोस्रो दिन समूह क बाट शारदा श्रेष्ठ, विमला पाण्डे, सानुमैँया श्रीवास्तव, भवानी गौतम, तुलसीनारायण श्रेष्ठ, विपना श्रेष्ठ र ख समूहबाट जयबहादुर राई, अमृता कोइराला, चञ्चला शर्मा, जयन्ती मल्ल, प्रविन ढकाल, मिनु श्रेष्ठले गुरु पादुका पूजन गर्ने सौभाग्य पाउनु भएको थियो ।

प्रशिक्षणको अन्त्यतिर सुनाइएको ग्रेडिङमा कार्यकर्ता सहायक समूह क बाट उप-नेतृत्वकर्तामा सुमन थापा, अनिता बस्नेत, उषा प्रधानाङ्ग, अनिता चित्रकार, नयनकृष्ण त्रिपाठी, लक्ष्मी गुरागाईं, थानेश्वर गुरागाईं, कमला सोडारी, राजकुमार सिलवाल, नागेश कँडेल, रमेश के.सी., बलराम पौडेल, लक्ष्मण जोशी, कविता राना, खगराज बस्नेत पदोन्नत हुनुभयो भने ख समूहबाट क मा पदोन्नत हुनेहरूमा क्रमश: आशा थापा, विनोदप्रसाद बराल, भाष्करानन्द राजोपाध्याय, रामेश्वर त्रिपाठी, तुलसीमाया महर्जन, भवानी शर्मा, सुनयना कार्की, निरज कर्माचार्य, सम्झना अर्याल, जनकबहादुर खड्का, प्रतिमा पराजुली, हरिगोपाल राजभण्डारी, चन्द्रमाया लिम्बु, अमृत सिके, शर्मिला राजबाहक हुनुहुन्थ्यो ।

## प्रशिक्षण

गत असार २८ गते काठमाडौँ उपत्यकाभित्र रहेका प्रचारप्रचार कक्ष, आरती संचालन केन्द्र र प्रस्तावित सम्पर्क कार्यालयहरूको लागि प्रशिक्षण कार्यक्रमको आयोजना गरियो । बसुन्धरास्थित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा आयोजित कार्यक्रममा सिद्धाश्रम शक्ति केन्द्रको संरचनाभित्रका इकाईहरूमा कार्यरत कार्यकर्ताहरूको उपस्थिति थियो ।

अत्यावश्यक सूचनामूलक कार्यक्रममा संस्थागत संरचनाभित्र पर्ने तीनवटै इकाईहरूको जानकारी, कार्यक्षेत्र, दायित्व तथा पालन गर्नुपन नियमहरूका बारेमा जानकारी दिइएको थियो । कार्यक्रममा इकाईहरूले आश्रम संचालन गर्न अपनाउनु पर्ने नीति-नियमका अतिरिक्त गुरुकार्यमा कार्यकर्ता परिचालित हुँदा अपनाउनु पर्ने मापदण्डका बारेमा पनि कार्यकर्ताहरूलाई सुसूचित गराइएको थियो ।

### अन्तरक्रिया कार्यक्रम

सम्पर्क कार्यालय ललितपुरको आयोजनामा गत श्रावण २५ गते लगनखेलको बुद्धि विकास मण्डलमा गोरक्ष निखिल वाणी पत्रिका विस्तारसम्बन्धी अन्तरक्रिया कार्यक्रम सम्पन्न भयो ।

सो कार्यक्रममा पत्रिकालाई जन-जनमा पुऱ्याउन अपनाउनु पर्ने नीति, पत्रिकाको महत्त्व तथा अन्य विषयमा छलफल गरिएको थियो । ललितपुर सम्पर्क कार्यालयबाट बढी पत्रिका सदस्य बनाउनु हुने साधक शालिग्राम सिलवाललाई उक्त अवसरमा पुरस्कृत गरिएको थियो ।

# गुरुदेवसँगको पहिलो भेट

एक दिन आकाश गमनको चर्चा चल्दा स्वामीले भन्नुभयो– जसले आफ्नो भौतिक शरीरलाई हावाभन्दा हल्का पारेर माथि उठ्न सक्दछ, त्यो आकाश गमन पनि गर्न सक्दछ ।

गुरुदेव ! यो शरीर मध्याकर्षण नियमहरूमा बाँधिएको छ, यसैले भूमिमा यो स्थित छ, फेरि...।

गुरुले हाँसेर भन्नुभयो– पागल योगीहरूका लागि यो पनि अगम्य छैन। शरीरमा रज, तम र सत्व तीनैको आविर्भाव छ । जब मानिसले साधनाबाट सत्वको बाहुल्यता शरीरमा गर्दछ भने त्यो लघुत्व एवं हल्कापन प्राप्त गर्दछ । जति शरीर सत्वगुणबाट आवेष्टित हुन्छ त्यति नै त्यो स्थूलताबाट पर वायवीय रूप धारण गर्दछ । यो सत्वाकर्षक प्राणायाम, जप एवं अन्य साधनाहरूबाट सम्भव भए जति शरीरको लघुत्वमा वृद्धि हुन्छ, त्यत्ति नै व्यक्ति माथि उठ्न सक्दछ । कुण्डलिनी शक्तिको प्रबल जागरणबाट पनि यो सम्भव छ ।

गुरुदेव ! कुनै साधकले कुम्भकद्वारा पनि यस क्रियालाई सम्पन्न गर्न सकिन्छ भनेर बताउनु भएको थियो– मैले पूर्व अनुभवलाई ध्यानमा राखेर जिज्ञासा राखेँ ।

स्वामी हाँस्नुभयो । कुम्भकबाट पनि यो सम्भव छ । हाम्रो चतुर्दिक जो वायुमण्डल छ त्यसबाट आभ्यन्तरिक वायु कुम्भक प्रयोगद्वारा हल्का गरेपछि स्वभावतः शरीर हलुको भएर माथि उठ्दछ । तर यसको पनि मूलाधार भनेको कुण्डलिनी नै हो किनकि मूलाधारमा स्थित कुण्डलिनी चिदग्निको प्रज्ज्वलन भएपछि ऊष्णताबाट भित्रको वायु हलुका हुन्छ तथा उत्थित हुने चेष्टा गर्दछ । शरीर पनि उत्थित हुन्छ । तर शरीर मात्र उत्थित भएर आकाश गमन सम्भव छैन । यसका लागि प्रशस्त साधना गर्नुपर्ने हुन्छ । यसपछि पूज्य गुरुदेवले चिदग्नि प्रज्ज्वलन गर्ने विधि बताउनु भयो र चिदग्नि प्रज्ज्वलन गरेर कुन प्रकारले आभ्यन्तरिक वायुलाई हल्का गरेर शरीरलाई लघुत्व दिइन्छ, यस प्रयोगलाई पनि गरेर देखाउनु भयो ।

मैले यसलाई पछि अनुभव पनि गरेँ । यसपछि करिब ५ वर्षपछिको कुरा हो । एकपटक मेरो सानो भाइ बिरामी भयो । बिरामी बढ्दै गयो । बाँच्ने सम्भावना कम हुँदै गयो । कसैलाई पनि नउठाइकन एकरात ऊ पिसाब फेर्न निस्क्यो । आँगनमा गइरहँदाखेरि उसलाई चक्कर आयो । ऊ लड्खडायो । जहाँ ऊ उभिएको थियो, त्यस नजिकै दाना हाल्ने कामका लागि प्रयोग हुने तीखो बल्छी थियो । लड्खडाउँदा यदि ऊ लडेको भए त्यही बल्छीमाथि नै लड्थ्यो र उसको टाउको छेडिन्थ्यो । होश आएपछि भाइले सोध्यो– मलाई कसले सहारा दिएको थियो ?

मैले भने– हामी त निद्रामा थियौं, तिमीलाई कुनै होश थियो ?

भाइले भन्यो– एकजना बाबा हुनुहुन्थ्यो– श्यश्रुयुक्त शान्त अनुहार, तेजस्वी मुखमण्डल । म जब लड्न लागेको थिएँ उहाँले मलाई सम्हाल्नु भयो र हल्कासित यस पलङ्गमा सुताइदिनु भयो । उहाँले मलाई दबाई पनि दिनुभएको थियो ।

उसले बन्द भएको मुठ्ठी खोल्दा त सेतो खालका स-साना दबाई उसको हातमा थिए ।

–यसको प्रयोग कसरी गर्ने ?

–यो त थाहा छैन । शायद उहाँले मलाई केही बताउनु पनि भएको थियो । तर बेहोशीजस्तो हुनाले मलाई केही पनि सम्झना रहेन ।

म पुलकित भएँ कि श्री श्री गुरुदेव आउनुभएको थियो । म खिन्न पनि थिएँ कि यस लौकिक शरीरका लागि पूज्य गुरुदेवले कष्ट उठाउनु पर्‍यो । कोठामा पद्मगंध व्याप्त थियो जसबाट यो प्रमाणित हुन्थ्यो कि केही समय पहिले पूज्य गुरुदेव आउनुभएको थियो ।

दबाईको प्रयोगको विवरण जान्नु आवश्यक थियो । म स्नान गरेर ध्यानस्थ भएँ । ५-७ मिनेटपछि नै श्री श्री गुरुदेवसँग टेलिप्याथीको माध्यमबाट सम्पर्क भयो । मैले भनेँ– हजूरलाई कष्ट भयो ?

अरे पागल ! तिमीहरू सबै आराम गर्दछौ, हामीलाई भने तिमीहरूको ख्याल राख्नु पर्दछ ।

दबाई ख्वाउने विधि बुझेर त्यसैअनुसार खान दिइयो । आश्चर्यजनकरूपमा उसले आरोग्यता प्राप्त गर्‍यो । डाक्टरको समूह यस कुरामा हैरान थियो कि यति भयंकर बिमारी यति चाँडै कसरी ठीक हुन सक्यो जबकि संसारको कुनै पनि औषधिले यति चाँडै स्वस्थ पार्न सक्दैन । अस्तु ।

एकपटक कुम्भ भेलामा तिब्बती साधु लोगोम्पासँग भेट्ने सौभाग्य प्राप्त भयो । तिब्बतमा आकाश गमनलाई लोगोम भनिन्छ र जसले यस प्रयोगलाई जान्दथ्यो उसलाई लोगोम्पा भनिन्छ । विदेशीहरूले पनि आफ्ना पुस्तकहरूमा यस अनुभवलाई लेखेका छन् । डा. जे.एम. डिस्टिगले आफ्नो तिब्बत यात्राको दौरान एकजना लोगोम्पासँग भेटेका थिए र आफ्ना आँखाले आकाश गमन भएको देखेका थिए । एकपटक पूज्य गुरुदेवले जलगमन प्रक्रियालाई सम्झाउनु भयो र नजिकको नदीमा नाङ्गो पाउ हिँडेर देखाउनु भयो । त्यसमा पनि कुम्भक-रेचन प्रक्रिया आवश्यक छ । मेरा गुरुभाइ स्वामी नित्यानन्दले पछि वार्तालापको क्रममा मसँग जलगमन प्रक्रियाका बारेमा

विस्तारपूर्वक बताएका थिए । स्वामी नित्यानन्द पूज्य गुरुदेवका कर्मठ शिष्य थिए र बाह्र वर्षसम्म कठोर एकसान साधना गरेका थिए । उनले बताएका थिए कि यस साधनापछि पानीमा हिँड्नाले यस्तो प्रतीत हुन्छ कि हामी बिछ्याइएको हिउँमा हिँडिरहेका छौं । उनले केही समय मलाई अभ्यास पनि गराएका थिए । तर फेरि गुरुआज्ञाअनुसार मलाई गृहस्थमा आउनुपऱ्यो । हुन त यो साधना कठोर अवश्य छ, तर जटिल भने छैन । यसका लागि समय, शक्ति एवं साधनाको आवश्यकता पर्दछ ।

गुरुको धेरै समयसम्म मलाई साहचर्य प्राप्त भयो । उहाँ सूर्यविज्ञानका अद्‌भुत ज्ञाता हुनुहुन्थ्यो । यसभन्दा पहिले यसबारे यत्रतत्र ग्रन्थहरूमा पढिसकेको थिएँ तर प्रत्यक्ष हेर्ने अवसर प्राप्त भएको थिएन ।

सूर्यविज्ञानको आधार सूर्य-रश्मि विज्ञान हो । यी विभिन्न रश्मिहरूको संयोगबाट विभिन्न पदार्थहरूको प्रादुर्भावको जन्म हुन्छ । वस्तुहरूका सत्ताको अभिव्यंजक यी रश्मिहरू नै हुन् । अत: यी रश्मिहरूको परस्पर संघटन सूर्य विज्ञानको मूलाधार हो ।

सूर्य रश्मिमा संसारको प्रत्येक वस्तु वा पदार्थको निर्माण वा संरचनाको शक्ति छ । जुन योगीले यस रश्मिहरूको परस्पर संवननको रहस्य बुझ्दछ, त्यसले सूर्यविज्ञानलाई पनि बुझ्दछ । सूर्यविज्ञानमाथि प्रशस्त जानकारी एवं योगसाधना श्रीमुखबाट प्राप्त भएको थियो, तर ती सबै पाठकहरूका लागि अगम्य र गुह्य हुनाले प्रस्तुत गर्नु उचित नहोला ।

एक दिन सूर्यसिद्धांतलाई लिएर प्रश्न चलिरहेको थियो । मैले सोधेँ– गुरुदेव ! के संसारका सबै वस्तुहरूको आविर्भाव यस सिद्धान्तको माध्यमबाट सम्भव छ ?

स्वामीले बताउनु भयो– यसमा कुनै शंका छैन । उहाँले आफ्नो शरीरबाट नै लेन्सको आविर्भाव गरेर देखाउनुभयो र नजिकैको एउटा काठको टुक्रालाई उठाउनु भयो र सोध्नुभयो– तिमी के चाहन्छौ ?

मैले भनेँ– यसबाट फुलेको ताजा गुलाबको फूल बन्न सम्भव छ ?

उहाँले लेन्सबाट सूर्य किरणहरूको विकीरण त्यस काठको टुक्रामा पठाउन थाल्नुभयो । दुई मिनेटभित्र त्यो काठको टुक्रा एउटा सुन्दर गुलाबको फूलमा परिणत भइसकेको थियो । यसपछि उहाँले गुलाबको फूललाई चमेलीको फूलमा परिवर्तन गरेर पनि देखाउनुभयो ।

यसै प्रकार एकदिन प्रसंगवश उहाँले वृक्षको एउटा पातमा सूर्यरश्मिको विकीरण पठाएर त्यसलाई आँपको रुखमा परिणत गर्नुभयो जसलाई उहाँका शिष्यहरूले खानु पनि भएको थियो ।

मैले एकदिन अवसर पाएर सोधेँ– गुरुदेव ! के पूर्वजन्मको बारेमा विस्तारपूर्वक थाहा पाउन सकिन्छ ? आगामी जीवनलाई पनि हामी देख्न सक्छौं, बुझ्न सक्छौं ?

उहाँले बताउनुभयो– यसमा कुनै कठिनाइ छैन । स्वयं वा अन्य कसैको पूर्वजन्मको बारेमा थाहा पाउनका लागि त्रिलोचन साधना गर्नुपर्दछ । यसबाट कुनै पनि प्राणीको पूर्वजन्म हुबहु देख्न सकिन्छ र आगामी जीवनलाई बुझ्नका लागि निर्वाणी साधना सम्पन्न गर्नुपर्दछ । यसबाट त्यस प्राणीलाई देख्नासाथ उसको आगामी जीवन आँखाको सामु साकार हुन जान्छ ।

मेरो आग्रहमा उहाँले दुवै साधना विधिपूर्वक सम्झाउनु भयो, सिकाउनु भयो र प्रत्यक्ष प्रमाणित गरेर देखाउनुभयो ।

साधना सम्पन्न भएपछि कुनै पनि प्राणीलाई देखेपछि उसको पूर्वजन्म र भावी जीवन त्यसैप्रकार खिच्दथ्यो जसरी हामीले चलचित्रमा दृश्य देखिरहेका छौं ।

एकपटक गुरुदेवसमक्ष तृतीय नेत्रका बारेमा चर्चा चल्यो । मैले निवेदन गरेँ कि केही समयसम्म तिब्बती साधु लोगोम्पासँग पनि बिताउने मौका प्राप्त भएको थियो । तृतीय नेत्रको बारेमा उहाँले मलाई धेरै कुरा सिकाउनु पनि भएको थियो ।

गुरुदेवले भन्नुभयो– वैचाक्षी साधनाबाट पनि तृतीय नेत्रको स्फुटीकरण हुन सक्छ । जब यस्तो हुन्छ उसका लागि भूत, भविष्य, वर्तमान, कालातीत आदि अगम्य हुन पाउँदैन । यसको माध्यमबाट कुनै पनि व्यक्तिको सम्पर्कित वस्तुबाट पनि उसको भूत, भविष्यलाई जान्न सकिन्छ ।

मेरो आग्रहमा गुरुदेवले मलगायत भाइ र नित्यानन्दलाई यो साधना सिकाउनुभयो ।

म गुरुदेवको कति ऋणी छु भन्ने कुरा यस क्षुद्र लेखमा लेखेर सम्भव पनि छैन । गुरुको आज्ञाबाट नै मलाई एकदिन त्यस आश्रमबाट बिदा लिन पऱ्यो । म कुनै पनि हालतमा त्यस आश्रमलाई छोड्न चाहँदिन थिएँ, न त मलाई गृहस्थ जीवनमा नै कुनै रुचि थियो । तर गुरु आज्ञाको सामु म निहुरिनु पऱ्यो । उहाँले आज्ञा दिनुभयो– तिमी गृहस्थ साधक बन, म सधैं तिम्रो साथ छु । यो आदेश ग्रहण गरेर म सीधा घर फर्केको थिएँ । क्रमश:

जय गुरुदेव !

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरुप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौं ।**

**यदनुग्रह मात्रेण**
**शोकमोहौ विनश्यतः ।**
**तस्मै श्रीदेशिकेन्द्राय**
**नमोऽस्तु परमात्मने ॥११५॥**

भावार्थ : गुरुका अनुग्रह मात्रले समस्त शोक र मोहको नाश हुन्छ, यस्ता दिव्य-चैतन्य गुरुलाई श्रद्धापूर्ण हृदयले नमस्कार गर्दछु । गुरु एउटा ज्वलन्त शक्ति हुनुहुन्छ । जति पनि पाप-ताप हुन्छन् ती सबै गुरुद्वारा समाप्त भइहाल्छन् । जुन प्रकारले विशाल परालको थुप्रोलाई आगोको एउटा झिल्कोले बालेर खरानी पारिदिन्छ, ठीक त्यस्तै प्रकारले शिष्यका अनेकौं जन्म-जन्मान्तरका दोष एवं पापहरूलाई गुरूप्रदत्त ज्ञानले भस्म पारिदिन्छ ।

**गुकारो भवरोगः स्यात्**
**रुकारः तन्निरोधकृत् ।**
**भव रोग हरत्वाच्च**
**गुरु रित्यभिधीयते ॥११६॥**

भावार्थ : गुरु शब्दमा 'गुकार' भवरोगको प्रतीक हो र 'रुकार' त्यसलाई नष्ट गर्ने प्रकाशरूप ज्ञानको प्रतीक हो । भवरोगलाई समाप्त गर्ने भएकोले उहाँलाई 'गुरु' भनिएको हो । अँध्यारोको विनाश बत्ती अथवा सूर्यको प्रकाशले सम्भव छ, त्यसलाई लट्ठीले पिटेर अथवा अन्य उपायले हटाउन सकिंदैन । त्यस्तै प्रकारले जीवभित्र समाहित अज्ञानबाट उत्पन्न भ्रम वा शंकालाई हटाउन गुरुबाहेक अन्य कुनै उपाय छैन ।

**गुकारश्च गुणातीतो**
**रूपातीतो रुकारकः ।**
**गुणरूप विहीनत्वात्**
**गुरु रित्यभिधीयते ॥११७॥**

भावार्थ : 'गुकार'को अर्थ हो– सत्, रज आदि गुणहरूभन्दा भिन्न । 'रुकार'को अर्थ हो– दृश्यमान रूप जगत्भन्दा भिन्न । गुण र रूपभन्दा भिन्न भएकै कारण गुरुत्व गुणातीत एवं रूपातीत छ । सत्, रज, तमादि गुणहरू परिवर्तनशील तथा नाशवान् छन्, तर गुरुत्व सूक्ष्मतम् र शाश्वत् भएकोले यीभन्दा भिन्न छ किनभने 'एकोऽहं बहुस्याम्'– यस श्रुति वाक्यअनुसार यो विश्वप्रपंच त्यस चिन्मय गुरुतत्त्वकै विवर्त (चक्कर) हो ।

**स्थावरं जंगमं व्याप्तं**
**यत् किञ्चित् सचराचरम् ।**
**तत् पदं दर्शितं येन**
**तस्मै श्री गुरवे नमः ॥११८॥**

भावार्थ : सबै स्थावर अर्थात् स्थिर वा आफै नचल्ने रुख आदि, जंगम अर्थात् चल्ने पशुपक्षी आदि जति पनि चर-अचर पदार्थ छन्, ती सबैमा व्याप्त रहने एवं निजस्वरूपको बोध गराउने गुरुलाई म भावपूर्ण हृदयले नमस्कार गर्दछु । जहिलेसम्म जीव आफ्नो स्वरूपबाट अनभिज्ञ हुन्छ उहिलेसम्म अनन्त दुःखहरूको जालबाट बाहिर निस्कन सक्दैन । जीवलाई त्यसको स्वरूपसँग परिचय गराउने कार्य गुरुले गराउनु हुन्छ । तसर्थ, शिष्यलाई यो ज्ञान गुरुले नै दिन सक्नुहुन्छ ।

जय गुरुदेव !

# श्री निखिलेश्वर शतकम्

॥९७॥

**रत्नाकरैकशरणं सरितां यथा वै,**
**नायणैकशरणं खलु संश्रितानाम् ।**
**सिन्धौ तरङ्गलयवद् शरणं व्रजन्ती;**
**वन्दे गुरो ! निखिल ! ते चरणारविन्दम् ॥**

सबै नदीहरू जान-अन्जानमा समुद्रमा प्रवेश गर्नका लागि नै दिनरात बगिरहेका हुन्छन् । समुद्र मिलनपूर्व उनीहरूलाई कहिल्यै विश्रामको अनुभूति हुन पाउँदैन, यो एउटा सर्वविदित तथ्य हो । जन्म-जन्मान्तरदेखि प्रतीक्षारत प्रत्येक जीव पनि जान-अन्जानमा परब्रह्ममा विलय हुनका लागि छटपटाइरहेका हुन्छन्, चाहे उसले गलत बाटो नै रोजेको किन नहोस् । सच्चिदानन्दमय सागरबाट उठ्ने चञ्चल लहरहरूलाई ब्रह्मस्वरूप समुद्रभन्दा अरु कसले आश्रय दिन सक्छ ? हे प्रभु ! जसरी सम्पूर्ण नदीहरूको एक मात्र आश्रयस्थल समुद्र हो, ठीक त्यसै प्रकारले आफ्ना समस्त आश्रितहरूको परम आश्रयस्थल एक मात्र नारायण हुनुहुन्छ । तसर्थ, हे गुरुदेव निखिलेश्वर ! समुद्रमा तरङ्को विलयझैं हजूरका शरणमा परेको म हृदयदेखि हजूरका चरणहरूको वन्दना गर्दछु ।

॥९८॥

**याचे त्वदीयशरणं भवभीतिभीता,**
**नित्यं स्वकीयपरकीय-जनावगीता ।**
**उद्धारयाऽऽतंहृदयामिह मां प्रतप्तां ;**
**वन्दे गुरो ! निखिल ! ते चरणारविन्दम् ॥**

आफ्नो प्रारब्धबाट ठगिएकाले मैले जीवनमा अनवरत असामान्य परिस्थितिहरू एवं पीडाहरू सहेको छु । जीवनभरि विपरीत परिस्थितिमा पनि मेरो सामर्थ्यअनुसार निष्ठापूर्वक प्रत्येक क्षेत्रमा आफ्नो कर्तव्यको समुचित निर्वाह गर्ने चेष्टा राखेता पनि ठगिएको भाग्यको विडम्बनाले चारैतर्फबाट सधैँ दोष र तिरस्कार नै पाएँ । अब म यस स्थितिबाट आत्मोद्धार चाहन्छु, धेरै थाकिसकेँ गुरुदेव । तसर्थ, हे प्रभु ! म संसारबाट अत्यन्त भयभीत भएर आफ्ना, पराई सबैबाट अपमानित एवं प्रताडित भएर हजूरको शीतलमयी छहारीमा शरण लिन पुगेको छु । हे गुरुवर ! भवतापबाट तप्त म बारम्बार हजूरका चरणहरूको वन्दना गर्दछु । आफ्नो शरणागतको उद्धार गरिदिनु होस् भनी बारम्बार याचना गर्दछु ।

जय गुरुदेव !

### साबर संरचनाबाट प्राप्त

# दिव्य साधनात्मक सूत्रहरू

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरशः पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री साबर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना–ऊर्ध्वसंगति'को खण्ड घ (साबर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमशः प्रकाशित गर्दै आइरहेका छौँ। हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन्।*

## मन्त्रदाता

हामीले गर्ने मन्त्र साधनामा प्राप्त हुने मन्त्र जसले दिन्छ, जसको मार्फत्‌बाट हामीले मन्त्र पाउँछौँ, उनीहरूलाई मन्त्रदाता भनिन्छ। सामान्य अर्थमा मन्त्रदाता भन्नाले मन्त्र दिनु हुनेलाई बुझ्नुपर्दछ। मन्त्र साधनामा सफलताको लागि मन्त्रदाताको ठूलो भूमिका हुन्छ। मन्त्र दिने नै कमजोर छन्, आफूले क्षमता, सामर्थ्य नै प्राप्त गरेका छैनन् भने यस्ता व्यक्तिबाट लिएको मन्त्रले कुनै फल दिन सक्दैन। त्यसैले, मन्त्रदाता आफैमा सफल व्यक्ति हुनुपर्दछ, सक्षम व्यक्तित्व हुनुपर्दछ। आफैले साधनाको अनुभव नगरेकाहरू, तपस्याको रहस्य नबुझेकाहरूले केवल शास्त्र पढेको भरमा कतै किताबबाट साभार गरेर मन्त्र दिँदैमा उनीहरू मन्त्रदाता हुँदैनन्। यसरी प्राप्त मन्त्र साधना गर्दै हुनुहुन्छ भने मन्त्र दिने व्यक्ति सक्षम छन् कि छैनन्,

तपाईंले पनि विचार गर्नुपर्दछ । कारण मन्त्र साधनाको सफलताको पछाडि मन्त्रदाताको ठूलो हात हुन्छ ।

मन्त्रदाता नै अयोग्य छन्, मन्त्रदातासँगै देवीदेवताहरू नै रुष्ट छन्, ऋषिमुनिहरू नै रुष्ट छन्, गुरु नै रुष्ट छन् भने त्यस्ता व्यक्तिहरूबाट लिएको मन्त्रबाट साधना सफल हुन सक्दैन । त्यसैले, मन्त्र दिनेले केही क्षमता हासिल गरेको भएता पनि नीति, नियम, मान, मर्यादालाई उल्लङ्घन गरेका छन् भने यस्ता व्यक्तिबाट लिएको मन्त्रले सफलता दिन सक्दैन । यसैले, मन्त्रदाता कुनै सामान्य विषय होइन । जसले पायो उसैले मन्त्र दिने, जुन मन्त्र पायो त्यही मन्त्र दिने अधिकार कसैलाई छैन । मन्त्रदाता त्यस्तो हुनुपर्छ जसले गुरुसत्ताबाट विश्वास पाएको होस्, ऋषि सत्ताबाट विश्वास पाएको होस्, देवीदेवताको पनि विश्वास पाएको होस् । त्यसैले, सम्बन्धित सत्ताको विश्वास प्राप्त व्यक्तिबाट मात्रै मन्त्र लिनु पर्दछ । यस्ता व्यक्तिहरू मात्र मन्त्रदाताको रूपमा मन्त्र दिन लायक हुन्छन् । त्यसैले, मन्त्रदातको योग्यता, सक्षमता आदिले हामीले गर्ने साधनाको सफलतामा प्रत्यक्ष प्रभाव पार्दछ । यसैले, सफल, सक्षम सद्गुरुहरूको विश्वास प्राप्त व्यक्तिहरूद्वारा मन्त्र प्राप्त गरौं, साधनामा सफलतामा प्राप्त गरौं ।   जय गुरुदेव !



## ऋषि:

सामान्यतया ऋषि भन्नाले आध्यात्मिक क्षेत्रका दिव्य व्यक्तिहरूलाई बुझिन्छ जसले आफ्नो जीवनलाई तपस्यामा लगाउनुभयो, साधना, ध्यान, जप, तप, हवन, पूजन आदिमा लागेर केही प्राप्त गरी समाजकल्याणको लागि लाग्नुभयो । त्यस्ता समाजकल्याणका दिव्यतम विभूतिहरूलाई ऋषिको रूपमा आदर, सम्मान गरिन्छ, पूजित गरिन्छ । आफ्नो जीवनलाई आध्यात्मिक गूढ रहस्यहरूको खोज, अनुसन्धानमा लगाई दिव्य चीज एवं विषयहरूमा नयाँ-नयाँ आविष्कार गर्ने ऋषिहरूको उच्चता आफैमा अवर्णनीय छ ।

सृष्टिको शुरुआतसँगै ऋषिहरूले सृष्टिलाई व्यवस्थित पार्न दिव्यतम शास्त्रहरूको निर्माण गर्नुभयो । आफ्नो तपस्याको बलले वेदजस्तो दिव्यतम एवं अनुपम शास्त्रको निर्माण भयो । वेदमा लेखिएका मन्त्रहरू, समाजकल्याणका विधिहरू, मानवकल्याणका विधिहरूलाई ऋचा भनिन्छ । यी ऋचा लेख्ने भएर होला, यी ऋचाको निर्माणले होला उहाँहरूलाई ऋषि भनिन्छ । ऋषिहरूद्वारा नै मन्त्रको निर्माण गरिएको हो । वेदमा अध्ययन गर्‍यौं भने पनि वेदका विभिन्न मण्डलहरूलाई अर्थात् अध्यायहरूलाई विभिन्न ऋषिहरूको नामबाट नामकरण गरेको पाइन्छ । जुन ऋषिले आफ्नो तपोबलबाट ती अध्यायहरूको सिर्जना गर्नुभयो, त्यो अध्याय अर्थात् सूक्त सम्बन्धित ऋषिको नामबाट विख्यात् भएको पाइन्छ । यसरी जुन ऋषिहरू ती दिव्यतम् ऋचाका द्रष्टा भए उनीहरूलाई नै मन्त्र स्रष्टाको रूपमा आदर, सम्मान गरी पूजित गर्दै आइएको छ ।

ऋषिहरूले ती मन्त्रहरूको निर्माण गरी मानवकल्याण, समाजकल्याणको लागि सर्वसुलभ बनाइदिएको हुनाले उहाँहरूलाई मन्त्र स्रष्टाको रूपमा उच्च आदर, सम्मान गर्ने गरिन्छ । यसरी ऋषिहरूद्वारा रचना गरिएका मन्त्रहरूको सम्पूर्ण अधिकार ऋषिहरूमा निहित हुने गर्दछ । ऋषिहरू खुशी नभएसम्म ती मन्त्रहरू सिद्ध हुँदैनन्, ती मन्त्रबाट गरिएका साधनाहरूमा सफलता प्राप्त गर्न सकिँदैन । पहिले-पहिले ऋषिहरूलाई आदर, सम्मान नपुग्दा, ऋषिहरूलाई खुशी बनाउन नसक्दा आफूले सृष्टि गरेका मन्त्रहरू कीलित गरिदिने गरेको पाइन्छ । कीलित भन्नाले ती मन्त्र जसले जपे पनि सिद्धि नहुने गराइएको हुन्छ । सम्बन्धित ऋषि खुशी नभएसम्म, उहाँलाई दिन मन नलागेसम्म, उहाँले मूल ताल्चा नखोलेसम्म उक्त मन्त्रले फल दिन सक्दैन, उक्त साधना सफल हुन सक्दैन, मन्त्रलाई सिद्ध गर्न सकिँदैन । त्यसैले मन्त्र स्रष्टा ऋषिलाई खुशी बनाउनलाई उच्च आदर, सम्मान गर्नुपर्दछ ।

मन्त्र साधनामा अघि बढ्ने प्रत्येक व्यक्तिले आफूले प्राप्त गरेको मन्त्रको स्रष्टा ऋषिलाई उच्च किसिमको आदर, सम्मान गर्नुपर्दछ, ऋषिलाई स्थापना गर्नुपर्दछ । हुन त साधनामा मात्रै होइन, सम्पूर्ण क्रियाकर्म एवं धार्मिक गतिविधि ऋषिहरूको पूजा बिना, उहाँहरूको स्मरण बिना अधूरो र अपूरो नै रहन्छ । त्यसैले पनि आध्यात्मिक क्षेत्रका दिव्यतम धरोहरहरूको उच्च सम्मानले नै प्राप्ति सहज हुन्छ, प्राप्ति अनुकूल हुन्छ । ऋषिसत्ता दैवीसत्ताभन्दा उच्च सत्ता हो । ऋषिहरूले रचना गर्नुभएको दिव्य मन्त्रभित्रै दैवीसत्ता निहित हुन्छ । ऋषिहरू खुशी नभएसम्म, उहाँहरूले नचाहेसम्म दैवीकृपा पनि सम्भव हुँदैन । यसैले, दैवीकृपा पनि ऋषिकृपामा नै निर्भर हुन्छ । त्यसैले, हामीले गरेको साधनामा सफलता प्राप्त गर्न ऋषिहरूलाई, ऋषिसत्तालाई सधैं स्मरण, प्रार्थना, आराधना गर्नुपर्ने हुन्छ । सकेसम्म ऋषिहरूलाई स्थापना गर्ने, सकेसम्मको श्रद्धा, भक्तिले पुकार्दा पनि उहाँहरूलाई खुशी बनाउन सकिन्छ । आफूलाई प्राप्त मन्त्र जप गर्दैमा मात्रै मन्त्र सिद्ध हुने होइन । मन्त्र सिद्ध हुनलाई, मन्त्र साधनामा सफलता प्राप्त गर्नलाई मन्त्र रचना गर्नेलाई पहिले खुशी गराउनुपर्दछ, आदर, सम्मान गर्नुपर्दछ । प्रक्रिया नमिलाई केही कुरामा पनि सफलता प्राप्त गर्न सकिँदैन । त्यसैले, ऋषिसत्तालाई आदर गरौं, सम्मान गरौं, साधनामा सफलता प्राप्त गरौं ।   जय गुरुदेव !

**मन्त्र साधना–ऊर्ध्वसंगति ग्रन्थको दिव्य साधनात्मक सूत्रहरूबाट साभार गरी पहिल्यै प्रकाशित भए पनि समय सान्दर्भिक भएकोले यो सत्र पुनः प्रकाशित गरिएको छ ।**

# नौ वर्ष बितेछ...

२०४६ को जनआन्दोलनपश्चात् प्राप्त उपलब्धिलाई संस्थागत गर्दै प्रजातन्त्र प्राप्तिको दिशामा देश अग्रसर हुने क्रम सँगसँगै नेपालमा पत्रपत्रिकाको बाढी आयो। यति धेरै पत्रिकाहरू प्रकाशित हुन थाले, पाठकलाई पनि कुन पत्रिका पढ्ने कुन पत्रिका नपढ्ने, सोच्नुपर्ने स्थिति आयो। पत्रिका प्रकाशन आफैमा एउटा चुनौति हो, आफैमा एउटा असाध्यै गाह्रो र अनिश्चित कर्म पनि हो। त्यो यस अर्थमा कि पत्रिका कतिसम्म बाँच्छ अथवा कहिलेसम्म पत्रिकालाई निरन्तरता दिन सकिन्छ भन्ने कुराको कुनै निश्चितता हुँदैन किनभने नेपालमा प्रकाशित पत्रपपत्रिकाहरू धेरै मात्रामा प्रकाशित भए र त्यतिकै मात्रामा बन्द पनि भएर गएको इतिहास छ। एक त पत्रपत्रिका पढ्ने बानी पनि धेरै कमै मात्र नेपालीहरूको छ र पढे पनि किनेर पढ्ने बानी अझै कमको मात्र छ र किनिहाले पनि धेरै पत्रपत्रिकाहरू राजनैतिक अथवा समसामयिक विषयवस्तुका पत्रपत्रिकाहरू किन्ने प्रचलन छ। यस्तो समाजमा आध्यात्मिक पत्रिकालाई समाजमा स्थापित गरेर आध्यात्मिक पत्रिका पढ्ने बानी बसाउनु आफैमा एउटा हास्यास्पद कुराजस्तो लाग्दछ। यस्तो अप्ठेरो अवस्थामा पनि हामी परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा आशीर्वादस्वरुप आज यो पत्रिका दशौं वर्षमा प्रवेश गर्न सफल भएको छ। यसलाई आफैमा एउटा ठूलो उपलब्धिको रुपमा हामीले ठानेका छौं। हेर्दाहेर्दै नौ वर्ष बितेछ। नौ वर्षको यो अवधिलाई फर्केर हेर्दा कैयौंपल्ट हामी पत्रिका प्रकाशन गर्ने सिलसिलामा संघर्ष गर्नुपर्ने स्थितिमा पुग्यौं भने कैयौंपल्ट पत्रिकालाई समाजमा स्थापित गर्नका लागि पत्रिकाको महत्त्व बुझाएर जनजनमा आध्यात्मिक सन्देश फैलाउनका लागि धेरै दुःख र कष्ट पनि सहनुपरेको छ। तर ती सबै कुरा हाम्रा लागि गौण छन् किनकि हाम्रा प्रिय पाठकवर्गले हामीलाई स्वीकार गरिदिनुभएको छ। सद्गुरुको कृपा र पाठकहरुको न्यानो मायाको कारण नै आज यो आलेख तयार पार्दा हामीलाई गर्व महसुस भइरहेको छ किनकि दशौं वर्षमा प्रवेशसँगै प्रेस काउन्सिलको वर्गीकरणमा पनि पहिलोपटक यो पत्रिकाले अर्थात् आध्यात्मिक पत्रिकाले 'क' वर्गको मान्यता प्राप्त गर्न सफल भएको छ। यसबाट के पुष्टि हुन्छ भने सद्गुरुको आशीर्वाद, हाम्रो प्रयास र समस्त पाठकहरुको मायासँगसँगै राज्यको एउटा निकायले पनि पत्रिकाको सही मूल्याङ्कन गरेको छ। त्यो हाम्रो लागि त्यति महत्त्वपूर्ण र ठूलो कुरा त होइन तर आफूले गरेको मेहनत सफलीभूत हुँदा खुशी लाग्नु स्वाभाविक हो। यो खुशी हामी सम्पूर्ण पाठकवर्गहरुसँग पनि बाँड्न चाहन्छौं। बढ्दै गइरहेको महँगी, उक्लिँदै गइरहेको बजारभाउसँगसँगै पत्रिकाको गुणस्तर कायम गरेर यसलाई अझै स्तरीय र संग्रहणीय बनाउने हाम्रो प्रयास यद्यपि जारी नै छ। कतिपय अवस्थामा सद्गुरुदेवबाट प्राप्त विषयवस्तुमा रहेर पत्रिका प्रकाशन गर्दा कमी कमजोरीहरु हुन गए होलान्, गल्ती एवं त्रुटिहरु हुन गए होलान्, ती सबैप्रति हामी सद्गुरुदेवहरुसमक्ष र समस्त पाठकवर्गसँग पनि क्षमा याचना नगरी रहन सक्तैनौं।

यसपटकको पत्रिका 'ऋषि विशेष'। ऋषि शब्दको महिमा र महत्त्वको बारेमा त आलेख पढिसक्नुभयो तर जसरी ऋषिको उच्च सम्मान हुनुपर्ने, ऋषि सत्ताको बारेमा जनजनमा विविध कुराहरुको बारेमा जानकारी गराउनुपर्ने थियो, ती प्रयास र प्रयत्नहरु समाजमा भएको पाइँदैन यद्यपि ऋषिस्वयं अत्यन्त दिव्यतम, पावनतम, अत्यन्त शक्तिशाली र क्षमतावान् व्यक्तित्व हुनुहुन्छ। भगवान्‌को पूजा आराधना त हामी नित्य गर्छौं तर ऋषिको सम्झना गर्ने, ऋषिलाई पूजा गर्ने अथवा ऋषिको महिमा गाउने प्रचलन भने कमै पाइन्छ। विशेष अवसरमा, चाडपर्वमा बाहेक अन्य दिन हामीले ऋषिहरुलाई शायदै स्मरण गर्छौं होला। हुन त देवसत्तालाई नै सबैथोक ठान्ने हाम्रो अहिलेको संस्कृति र परम्परामा ऋषिहरुलाई स्थान नदिएको चाहिँ होइन। देवतालाई पनि देवता बनाउन सक्ने त्यस्ता ऋषिहरुलाई हामीले सबैभन्दा पहिले खुशी पार्न सक्यौं भने देवता आफै खुशी नभई सुखै छैन किनकि देवताका पनि शक्तिका स्रोत हुन् ऋषिहरु। त्यसैले अत्यन्त आदरणीय, अत्यन्त सम्माननीय, प्रातः स्मरणीय समस्त ऋषिहरुप्रति हामी यसै पत्रिकामार्फत श्रद्धा, भक्तिपूर्वक नमन गर्दछौं र ऋषिसत्ताको बारेमा, ऋषिपरम्पराको बारेमा र ऋषि प्रथाको बारेमा समाजलाई जानकारी गराउन उहाँहरुप्रति श्रद्धा, भक्ति र विश्वास पैदा गर्न र गराउन सदैव लागिरहने प्रण पनि गर्दछौं।

अस्तु।